# मेचीदेखि महाकाली

(भाग ३)



पश्चिमाञ्चल विकास क्षेत्र

# विषय–सूची

# विषय–सूची

# परिचय

विशाल नेपालका द्रष्टा पृथ्वीनारायण शाहको गोरखा राष्ट्रिय एकताको प्रतीक भइआएको छ । आधुनिक नेपाली इतिहासको स्रष्टा यो गोरखा वीर गोरखालीको प्रेरणास्रोत भइआएको छ । गोरखाको गरिमा गहिरो छ । गोरखाको महत्ता विशिष्ट छ । राष्ट्रिय एवं अन्तर्राष्ट्रिय अभिलेखहरूमा गोरखाले महत्वपूर्ण स्थान पाएकी छ । प्रत्येक नेपाली हृदयकोले गोरखाको गौरव-गीत गाएको छ ।

यो गोरखा जहाँबाट राम शाहले राज्यको आर्थिक, सामाजिक एवं न्यायिक परिपाटीहरूको प्रारम्भ गरे र अद्यापि नेपालीहरू भन्दैछन् "न्याय नपाए गोरखा जानु" वास्तवमा न्यायकै मन्दिर भएको छ । यो गोरखा जहाँबाट पृथ्वीनारायण शाहले राज्यको विस्तार गरी नेपाल र नेपालीको अस्तित्व कायम गरे र आज हामीले हामी भन्न पाएका छौं, वास्तवमा विशाल अधिराज्यको सिर्जना स्रोत भइरहेको छ ।

दक्षिणपट्टि चक्रेश्वर तथा महाभारत उभिएका छन् भने उत्तरपट्टि हिमचुली र मनासुलु अग्लिएका छन । पूर्वपट्टि बूढी गण्डकी बगिरहेको छ भने पश्चिम पट्टि चेपे र मर्स्याङ्दी बगिरहेका छन् । इष्टदेवता गोरखनाथ र गोरखकालीको गोरखा धार्मिकस्थलहरूले भरिपूर्ण छ । कलापूर्ण दरबार र किल्लाहरूको गोरखा पुरातात्विक अभिलेखहरूले परिपूर्ण छ ।

गोरखाको पूर्वमा धादिङ, पश्चिममा तनहुँ, लमजुङ, मनाङ र उत्तरमा चीनको तिब्बत प्रदेश र दक्षिणमा चितवन जिल्लाहरू पर्दछन् । यो जिल्ला ८४° २७' देखि ८४° ५८' पूर्व देशान्तर तथा २७° १५' देखि २८° ४५' उत्तर अक्षांशसम्म फैलिएको छ । उत्तरपट्टि ग्याला भञ्ज्याङ र शृङ्गी हिमाल, दक्षिणपट्टि त्रिशूली, पूर्वपट्टि बूढी गण्डकी र पश्चिमपट्टि मर्स्याङ्दी, चेपे तथा मनासुलु शृङ्खला गोरखा जिल्लाका प्राकृतिक सीमाना हुन् । गोरखकालीको दक्षिणी पाखोमा अवस्थित पोखरीथोकमा गोरखाको सदरमुकाम रहेको छ । यो जिल्लाको क्षेत्रफल २,५०५ वर्ग किलोमिटर छ ।

यहाँका लेक, बेंसी र पाखाहरूमा जम्मा ६३ वटा गाउँ पञ्चायतहरू छन् । यी पञ्चायतहरूमा ८८,७०६ जना पुरुष र ८९,५५९ जना महिला गरी जम्मा १,७८,२६५ जना मानिसहरू बसोबास गर्दछन् । यो संख्या विभिन्न भाषा बोल्ने र विभिन्न धर्म परम्परामा विश्वास राख्ने नेपालीहरूको समष्टि रूप हो । क्षेत्री, बाहुन पछि यहाँको दोस्रो बहुसंख्यक जाति गुरुङ हो । यो जिल्लाका अधिकांश निवासीहरू कृषि व्यवसायमा निर्भर छन् ।

# प्राकृतिक स्वरूप र सम्पदा

महाभारत शृङ्खलाको उत्तरी भू–भागबाट उठेर मनकामना, गोरखनाथ र लार्के भोट हुँदै ग्याला भञ्ज्याङसम्म फैलिएको गोरखा जिल्लाको भौगोलिक स्वरूप लेक, बेंसी र हिमाली पर्वतहरूले बनेको छ। चेपेको शिरमा बौद्ध हिमाल उठेको छ भने चुलिङको भीरमा हिमालचुली। जिल्लाको पश्चिमोत्तर भेकमा मनासुलु र पूर्वोत्तर भेकमा शृङ्गी हिमाल अग्लिएका छन्। ग्याला र लार्के भञ्ज्याङदेखि अनन्त हिमनदीहरू-बाट पानी लिई बगेको बूढीगण्डकी स्यार खोलाको दोभानबाट गोरखाको पूर्वी सीमाना हुनथाल्छ। मनाङ-भोट काटेर लमजुङ हुँदै झरेको मर्स्याङदी चेपेको सङ्गमसम्म पुगेर गोरखालाई छुन थाल्छ। यहाँका बेंसी र टारहरू समुद्र सतहबाट करीब ४८८ मिटर (१,६०० फीट) मात्र अग्लिन सकेका छन् भने यहाँका हिमाली चुचुराहरू ८,१५६ मिटर (२६,७५२फीट) माथिसम्म चुलिएका छन्। जिल्लाको उत्तरी भागमा सधैं हिउँ पर्छ। जिल्लाको दक्षिणी खोंचमा गर्मी हुन्छ। यहाँको एक तिहाई दुर्गम क्षेत्रमा तीनवटा मात्र गाउँ पञ्चायतहरू छन् भने बाँकी भागमा साठीवटा पञ्चायत छरिएका छन्। लेकाली पाखोमा शेर्पा केटी चौंरी चराइरहेकी हुन्छे भने बेंसीको पाटीमा कुमाल केटो चक्र घुमाइरहेको हुन्छ। कतै नाङ्गा डाँडाहरू छन् भने कतै गुराँस घारी छन्। यस्तै छन् यहाँका भौगोलिक विभिन्नताहरू र यिनै विभिन्नताको संयुक्त रूप हो गोरखा।

## भौगोलिक बनावट

भौगोलिक बनावटको दृष्टिकोणबाट गोरखा जिल्लालाई मोटामोटी निम्न चार भागमा विभाजन गर्न सकिन्छ :–

(१) हिमाली प्रदेश
(२) भोट तथा लेकाली प्रदेश
(३) पहाडी प्रदेश
(४) बेंसी तथा टारहरू

### हिमाली प्रदेश

जिल्लाको उत्तरी खण्डमा अवस्थित ५,०३० मिटर (१६,५०० फीट) भन्दा उच्च खण्डमा बाह्रै महीना हिउँ पग्लिदैन। यस्ता प्रदेशलाई हिमाली प्रदेश भनिन्छ। यो प्रदेशको सबैभन्दा उच्च ठाउँ मनासुलु हिमाल हो। यो हिमाल ८,१५६ मिटर (२६,७५२ फीट) अग्लो छ। ७,८९४ मिटर (२५,८९५ फीट) अग्लो हिमालचुली, ७,१७७ मिटर (२३,५४४ फीट) अग्लो शृङ्गी हिमाल तथा ६,६७४ मिटर (२१,८९० फीट) अग्लो बौद्ध हिमाल

र आसपासका हिमाली थुम्काहरू यही क्षेत्रमा पर्दछन् । रूपीनाला पहाड, सिर्दिवास पहाड, लार्के भञ्ज्याङ, ग्याला भञ्ज्याङ आदि ठाउँहरू पनि यहाँको हिमाली प्रदेशमा पर्दछन् । प्रोक गाउँ पञ्चायत अन्तर्गत पर्ने कालुछुमा ताल (काल ताल), बुद्ध हिमाल नजीकैको दूधपोखरी तथा दरौंदीको शिरमा रहेको नारदकुण्ड आदि रमणीय जलाशयहरू हिमालकै काखमा रहेका छन् । गोरखा जिल्लामा बग्ने चेपे तथा दरौंदी खोला र बूढीगण्डकीको मुहान पनि यही हिमाली प्रदेश हो । दुर्गम क्षेत्रमा पर्ने लापु पञ्चायत बाहेक गुम्दा, लाप्राक, उहिया, सिर्दिवास, प्रोक र ल्हो पञ्चायतहरूको अधिकांश-भू भाग यस्तै हिमाली प्रदेशमा पर्दछ ।

भोट तथा लेकाली प्रदेश

यो जिल्लाको उत्तरी भागमा बौद्ध हिमाल, हिमालचुली, मनासुलु, शृङ्गी हिमाल, रूपीनाला, सिर्दिपहाड, लार्के भञ्ज्याङ, ग्याला भञ्ज्याङ, शृङ्खला तथा लार्के भोटको करीब २,५०० मिटर (८,२५० फीट) माथिको क्षेत्र लेकाली प्रदेशमा पर्दछ । यो प्रदेशको धेरैजसो भागमा निरन्तर हिउँ परिरहन्छ । । प्रोक र ल्हो पञ्चायत क्षेत्रमा असोज-कात्तिकदेखि हिउँ पर्छ र चैत–वैशाखमा पग्लिन्छ । सामदो, सामागाउँ अर्थात् लार्के भोट क्षेत्रका गाउँलेहरू हिउँदमा जिल्लाको अन्य भागमा गई बस्दछन् । यस क्षेत्रमा मानिसहरू अस्थायीरूपमा भेडा च्याँग्रा र चौंरी पाल्दछन् । जाडोको बेलामा यी पाल्तु जीवजन्तु मात्र होइन वर्षामा लगाएको आलु, जौ आदि सीमित अन्नपातसमेत लिएर मानिसहरू जिल्लाको होचो भागतिर सर्छन् । अतः लार्के भोटमा पर्ने कतिपय गाउँहरूलाई त वर्षे बस्ती मात्र भने पनि हुन्छ । हिम रेखाभन्दा मुनि वृक्षरेखाभन्दा माथि रहेको भागमा केही हिमाली झारपात र वनस्पति पाइन्छ । वृक्षरेखाभन्दा तलका डाँडाहरूमा भने लेकाली वन देखिन्छ । यो क्षेत्रमा पनि हिउँदमा ज्यादा हिउँ पर्ने हुँदा मानिसको बस्ती ज्यादै कम छ ।

पहाडी प्रदेश

हिमाली प्रदेशको दक्षिण तर्फ २,५०० मिटर (८,२५० फीट) भन्दा मुनि करीब ९०० मिटर (२,९७० फीट) सम्मको भागमा पर्ने डाँडाकाँडा तथा भञ्ज्याङ र बस्तीहरूलाई पहाडी प्रदेश मान्न सकिन्छ । धार्चेको पहाड, सिरानचोक, सुलीकोट, उपल्लोकोट आदि पहाडी शृङ्खला पहाडी प्रदेशमा पर्ने उच्च भागहरू हुन् । यी पहाडका मुख्य चुलीहरूमा बस्ती बसेको पाइँदैन । छापथोक, पोखरीथोक, तार्कुकोट, चिप्लेटी तथा रिपडाँडाको अग्लो भाग पनि यही पहाडी प्रदेशमा पर्दछ । पहाडी प्रदेशमा हराभरा वनहरू छन् । यो भागमा सल्लो, गुराँस र धूपीका वृक्षहरू भएको कोणधारी वन देखिन्छ ।

यो जिल्लाका अधिकांश बस्तीहरू यही भूभागमा छन् । यहाँ पाखो बाली लाग्ने बारीहरू निकै देखिन्छन् । यो पहाडी प्रदेशमा भीर, पाखा पखेरा खोला खहरे र खोलसाहरू प्रशस्त छन् । यहाँको हावापानी स्वास्थ्यकर छ ।

बेंसी तथा टारहरू

बूढीगण्डकी, दरौंदी, चेपे, मर्स्याङ्दी तथा दक्षिणपट्टिको त्रिशूली तिरमा पर्ने समथर भूमि र पालुङटार, छेपेटार, महटार, पोखरीटार, सल्लटार, ठाँटी पोखरी, बाह्रपिर्के, च्याङलीटार, गाईखुरटार, कुन्दुरटार, ध्यालचोकटार, क्यामुन्टार आदि स्थानहरू बेंसी वा टार प्रदेशमा पर्दछन् । १,२२० मिटर (४,००० फीट) भन्दा मुनिको यो भागमा टार, बेंसी फाँटहरू मात्र होइन गोरखकाली, मनकामना, आँपपीपल, खाञ्चोक तथा

पहाडी प्रदेशको होचो भागमा पर्ने बस्तीहरू पनि पर्दछन् । जिल्लामा अत्यधिक खाद्यान्न उत्पादन हुने क्षेत्र यही नै हो । हाल यहाँको बेंसी र टारबाट औलो उन्मूलन भइसकेकोले पहाडी प्रदेशमा बस्ने मानिसहरू बेंसी र टारतिर झर्न थालेका छन् । यो क्षेत्रमा उष्ण वा अर्ध-उष्ण जलवायु पाइने हुँदा धान खेती राम्रो हुन्छ । सिचाइ हुन बाँकी फराकिलो टार तथा पाटाहरूमा कोदो, मकै, भटमास, मास, पिंडालु, तिल र घैया खेती पनि राम्रो हुन्छ । केही फाँटहरूमा उखु र सुर्ती जस्ता नगदे बाली पनि राम्रो भएको देखिन्छ साथै यहाँ आँप, लीची, रूखकटहर, भूईकटहर, केरा तथा मेवा जस्ता फलफूल पनि पाइन्छन् । यो क्षेत्रमा साल, चाँप खयर, कदम तथा सिमल जस्ता बोट वृक्ष र बाघ भालू तथा मृग आदि वन्य जन्तुहरू पनि छन् ।

## हिमाली पर्वतहरू

गोरखा जिल्लामा पर्ने हिमाली पर्वतहरूमध्ये मनासुलु र हिमालचुली मुख्य हुन । पर्वतारोहणको इतिहासमा यी पर्वतहरूको पनि विशेष स्थान छ । अतः मनासुलु र हिमालचुलीको संक्षिप्त विवरण तल प्रस्तुत गरिएको छ ।

मनासुलु हिमालः नेपाल अधिराज्यका उच्च हिमाली पर्वतहरूको समूहमा वर्गीकरण गर्न सकिने ८,१५६ मिटर (२६,७५२ फीट)[1] अग्लो मनासुलु गोरखा जिल्लाको उत्तर पश्चिम सीमानामा छ । यसको उत्तर–पूर्व पाखोबाट बगेका सहस्र हिमखोलाहरूले बूढीगण्डकीको सिर्जना भएको छ भने पश्चिमपट्टिका खोल्साहरूले मर्स्याङ्दीको सहायक नदीको काम गरेका छन् । मनासुलु श्रृङ्खला उत्तरमा लार्के भञ्ज्याङ र दक्षिणमा बौद्ध हिमालसम्म फैलिएको छ । यो बीचमा ६,०९६ मिटर (२०,०००फीट) देखि ७,६२० मिटर (२५,००० फीटसम्म) अग्ला अरू चुचुराहरू पर्दछन् । नेपालका अग्ला अग्ला हिमालहरू आरोहण गर्ने सिलसिलामा विभिन्न मित्रराष्ट्रहरूबाट आएका पर्वतारोहण दलले मनासुलु हिमालको टाकुरामा पनि दृष्टि दिनथालेका छन् । ई. सं. १९५२ देखि १९५५ सम्म जापानी पर्वतारोहण दलहरूले प्रत्येक वर्ष यो टाकुरामा चढ्ने असफल प्रयत्न गरे । कैयन धन-जनको क्षति भएपछि ई. सं. १९५६ मा जापानी पर्वतारोहण दलका श्री तोशीरो इमानुसी, ग्यालीसेन नोर्बु (शेर्पा) के. कातो र हिगेता पहिलो पटक मनासुलुको शिखरमा पुग्न सफल भए । तत्पश्चात् पनि विभिन्न पर्वतारोहण दलहरूले मनासुलुमाथि जाने प्रयासलाई जारी नै राखे । सन् १९७१ मा जापान र कोरियाका पर्वतारोहीहरूबाट प्रयत्न भयो । १९७२ मा अष्ट्रियन र कोरीयनहरूबाट पुनः प्रयास भयो । यसपटक कोरियाको पर्वतारोहण दलका १५ जना सदस्यहरू हिम पैरोमा परी मरे । १९७३ मा संघीय जर्मनीका पर्वतारोहीहरू मनासुलुको शिखरमा पुग्न सफल भए । सोही वर्ष स्पेनका पर्वतारोहीहरूबाट पनि असफल प्रयत्न गरियो । सन् १९७४ मा जापानको महिला पर्वतारोहण दलले यो पर्वतको चुलीमा टेक्न सफल भयो । यसरी हिमालय पर्वतारोहणको इतिहासमा मनासुलु हिमाल पर्वतारोहीको प्रेरणा र आकांक्षाको प्रतीक बनेको छ ।

हिमालचुलीः गोरखा जिल्लामा अवस्थित दोस्रो सबैभन्दा अग्लो पर्वत हिमालचुली हो। यसको उचाइ ७,८६४ मिटर (२५,८९५ फीट) छ । बौद्ध हिमालको उत्तरपट्टि गोरखा र लमजुङको सीमानामा पर्ने हिमाल चुलीको उत्तरी पाखोमा बग्ने हिमखोलाहरू बूढीगण्डकीमा मिल्छन् भने दक्षिणतिर बग्ने हिमाली खोल्साहरू मर्स्याङ्दीमा मिसिन्छन् ।

---

1. Hagen, Toni-Nepal, 3rd. Edition, 1971, P. 71

ई. सं. १९५५ मा पहिलोपटक बेलायतका पर्वतारोहीहरूले यो पर्वत आरोहण गर्न खोजेका थिए। यो प्रयासमा दलका नेता अर्थर र फीरमेनले आफ्नो ज्यान गुमाउनु पर्‍यो। प्रयत्न असफल भयो। १९५८ र १९५९ मा जापानीहरूले हिमालचुली आरोहण गर्ने असफल प्रयास गरे। १९६० मा जापानको केइओ विश्वविद्यालय पर्वतारोहण दल हिमालचुलीको शिखरमा पुग्न सफल भयो। त्यसपछि १९७० मा डच पर्वतारोहीहरूलाई यसको चुलीमा पुग्ने सफलता मिल्यो। काठमाडौंको दक्षिणी भागबाट समेत राम्रो देखिने यो पर्वत पर्वतारोहीको मात्र प्रेरणा नभएर पर्यटकहरूको दृश्यावलोकन विन्दु पनि भएको छ।

## नदीनालाहरू

यो जिल्ला गण्डकी नदी प्रणालीको क्षेत्रमा पर्नआउँछ। मध्यनेपालका दुई मुख्य नदी मर्स्याङ्दी र बूढीगण्डकीको बीचमा अवस्थित गोरखा जिल्लामा चेपे र दरौंदी लगायत अरू कैयन् खोलाहरू अविरल बगिरहेका छन्। गोरखाको दक्षिणपट्टि बूढीगण्डकी र त्रिशूलीको संगमस्थल बेनीघाटदेखि मर्स्याङ्दी-को दोभान त्रिवेणीसम्म पूर्वबाट पश्चिम बगेको त्रिशूली नदी पर्दछ। यो जिल्लाको बीचमा तथा सीमानामा बग्ने नदी र खोलाहरूको विवरण निम्नानुसार छः–

बूढीगण्डकी

लार्के र ग्याला भञ्ज्याङ क्षेत्रका खोलाहरूबाट प्रारम्भ भएर मनासुलु र हिमालचुलीका उत्तरी पाखोमा बग्ने अटूट हिमखोला तथा शृङ्गी हिमालको पश्चिमी भेकमा बग्ने खोलाहरूको पानी बोकी स्यार खोलाको दोभानदेखि धादिङ र गोरखाको बीचबाट दक्षिण बगेको बूढी गण्डकी बेनीघाटमा पुगेपछि त्रिशूलीमा मिसिन्छ। लार्के भोटबाट महाभारतको उत्तरी घाँचसम्म अविरल बगिरहने यो नदीले गोरखा जिल्लाको प्राकृतिक ढलको काम गरेको छ। ग्याला भञ्ज्याङदेखि स्यार दोभानको बीचमा रहेका लार्के, सामा गाउँ, ल्हो, स्यो, लि डाँडा, बरजम, प्रोक, बिही तथा दर्जुङ आदि बस्ती र खर्कहरू बूढीगण्डकीको आसपासमा रहेका छन्। स्यार खोलाको दोभानबाट दक्षिण लागेपछि कैयन बेंसी, खोंच र कन्दरा हुँदै यो नदी आरूघाट पुग्छ। त्यसपछि पनि सल्यानटार, पीपलटरा, सिमलटार तथा फूजेल र दर्भुङ हुँदै बेनीघाटमा त्रिशूलीमा मिसिन्छ। यो नदीको मुहानदेखि बेनीघाटसम्म यसमा मिल्ने सहायक खोलाहरू क्रमशः मवाङ खोला, शृङ्गी खोला, स्यार खोला, हुलिङ खोला, भालू खोला, माछे खोला, नौली खोला, मौदी खोला, तान्डरङ खोला, ज्याडुल खोला, आँखु नदी, फुजेल खोला र कौदी खोला हुन्। बूढीगण्डकीको तीरैतीर अनन्त भीर तथा पहरा हुँदै लार्के भोट जाने एक मात्र बाटो आरूघाटबाट प्रारम्भ हुन्छ। बोर्लाङ घाटमा डुङ्गा लाग्छ। आरूघाट, लापु बेंसी, पाँचेखोला दोभान उहिया भालू गाउँ, फिलिम, न्याक, दर्जुङ, ड्याङ र बिहीर छाकमा यो नदी माथि पुल बनेका छन्। बूढीगण्डकीको आसपासमा टारमात्र होइन, स-साना फाँटहरू मात्र होइन, कैयौं हरिया वन पाखा र रसिला बेंसीहरू पनि छन्। अन्ततः यो बूढीगण्डकी साधारण नदी मात्र नभएर गोरखाको प्राकृतिक ढल तथा लार्के जाने मूल बाटोको आधार पनि भएको छ।

चेपे नदी

सिर्दिवास गाउँ पञ्चायतको पश्चिमी सीमानामा अवस्थित विशाल बौद्ध हिमालका खोलाहरूबाट शुरू भएको चेपे नदी दूध पोखरीको निकास समेत आफूमा समावेश गर्दै गोरखाको पश्चिम सीमानामा बग्छ। बूढी-

गण्डकी जस्तो विशाल नदी नभए तापनि चेपेको महत्व कम छैन । हिम खोलाहरूबाट बनेको अटूट बग्ने यो चेपे रागिनास टारको पुछारमा पुगेपछि मर्स्याङ्दीमा मिसिन्छ । बौद्ध हिमालदेखि रागिनासको पुछारसम्म गोरखाको पश्चिमी सीमाना भएको यो नदीको आसपासमा रागिनासटार, अल्कारटार, साईंलीटार, ठाँटी पोखरी, मल्लाटार र बुद्धसिङ टार जस्ता फराकिला टारहरू पर्द छन् । पालुमटार, आँप पीपल, हर्मो, यालाजुङ, सिरानचोक, केराबारी, अजिरकोट, हंसपुर र खरीवोट पञ्चायत क्षेत्रका बेंसीहरू चेपेको वरपर पर्द छन् । च्याङ्दी खोला, साँघी खोला, अँधेरी खोला, सान्दी खोला, खार खोला, मिर्दिखोला चेपे नदीका सहायक खोलाहरू हुन् । यो नदीको आसपासमा विशाल टारहरू मात्र होइन मलिला खेत, बारी, बेंसी, हराभरा वन, र चरनहरू छन् । यो नदीको जलाधारबाट माथि उल्लेखित टारहरूको सिचाइ गर्न सकिने सम्भावना छ ।

दरौंदी खोला

बौद्ध हिमाल, रूपीनाला र नारदकुण्डको जलस्रोत संकलन भई जिल्लाको बीचैबीच उत्तरबाट दक्षिण बगेको दरौंदी मझुवा खैरेनीमा पुगेपछि मर्स्याङ्दीमा मिलेको छ । चेपे नदीको आसपासमा जस्तै दरौंदीको वरपर पनि टार, बेंसी र फाँटहरू छन् । अविरल बगिरहने यो नदीबाट वरपरका बस्तीहरूलाई जति फाइदा पुगेको छ, त्यस्तै बेफाइदा पनि भएको छ । मसेल दोभान निमेलदेखि कुन्दुर छाप गाउँसम्म करीब १३ किलोमिटर अर्थात चार कोशको भू भागमा दरौंदी नदी निकै फैलिएर बगेको छ। प्रायः प्रत्येक वर्ष यस क्षेत्रका धान खेतहरू दरौंदीले बगाएको हुन्छ । हिउँदमा सङ्घार तर्न सकिने यो नदी वर्षामा विशाल भेल भएर बग्छ । खेत, बारी र बाँसहरू लग्छ । यो क्षेत्रमा दरौंदी नदीको नियन्त्रण गर्नु आवश्यक छ । सिमजुङ, वारपाक, सौरपानी, मुचोक लाकुँरीवोट, गाँखु, भोंक्तेनी, गोरखकाली, मिरकोट, देउराली, कालिका, तारानगर र मनकामना पञ्चायत क्षेत्र हुँदै बगेको यो नदीबाट छेपेटार, राजटार, महटार, मुचोकटार, पोखरीटार तथा आसपासको समथर भू–भाग सिचाइ गर्न सकिने संभावना छ । चोरकोटे, गाईखुर बेंसी, घुनचोक, काली बोटे र ध्याचोकमा यो नदी माथि झोलुङ्गे पुलहरू छन्। यसका शाखाहरूमध्ये राङरूङ खोला, लाङदी खोला, स्याङदी खोला, लुङदी खोला, जराङ खोला, मसेल खोला, बेनी खोला, मुन्दुदी खोला, खार खोला, सीर्द खोला मुख्य हुन् ।

मर्स्याङदी नदी

गोरखा जिल्लाको दक्षिण पश्चिमपट्टि सीमानामा मर्स्याङदी नदी बगेको छ । यो नदी दामोदर, अन्नपूर्ण, पेरी र लेगुला हिमालयतिरका हिमखोलाहरूबाट शुरू भई गोरखाको उत्तर–पश्चिमपट्टिको छिमेकी जिल्ला मनाङमा बग्छ । मनाङबाट दक्षिण–पूर्व बगेको मर्स्याङदीमा लार्के हिमाल, हिमालचुली र मनासुलु हिमालतिरबाट झरेका खोलाहरू मिसिन्छन् । त्यसपछि लमजुङ जिल्ला हुँदै झरेको मर्स्याङदीले तार्कु घाटभन्दा केही तल रागिनास टारको दक्षिण छेउमा पुगेपछि सहायक नदी चेपे पनि भेट्छ र गोरखा जिल्लाको दक्षिण पश्चिम पालुटार, गाईखुरटार, च्यालिटारको छेउमा बग्न थाल्छ । चेपेको दोभानदेखि पालुङटारको पश्चिम किनारा हुँदै दक्षिण बगेको यो नदी फाउँदी, चुदिखोला र दरौंदीको पानीलाई समेत लिई मुङलीन नजीक पुगेपछि त्रिशूली गण्डकीमा मिसिन्छ । यो नदीको आसपासमा कतै फराकिला टार छन् भने कतै घना जङ्गल छन् र कतै घसिला बेसी । चेपेको दोभान र मुङलीनको बीचमा केही घाटहरू छन् । पालुङटार नजीकै डुङ्गा

लाग्छ । सतीघाट र मझुवा खैरेनीमा झोलुङ्गे पुल हालिएको छ । यही नदीको पश्चिमी किनार भएर डुमरे-बेंसी शहर बाटो लमजुङ र मनाङ जाँदैछ । मर्स्याङदी नदीबाट उत्पादन हुन सक्ने विद्युत् शक्तिको सम्भाव्यता अध्ययन भएको छैन ।

## ताल, दह र तातोपानी

गोरखा जिल्लामा हिमाली चुचुरा, विशाल टार तथा नदीहरू मात्र होइन सुन्दर तालहरू पनि छन् । यी ताल तथा दहहरू यस प्रकार छन्:–

कालुछुमा ताल– समुद्र सतहबाट ५,०६१ मिटर अर्थात् १६,७१५ फीट अग्लो भू-भागमा अवस्थित कालुछुमा ताल प्रोक पञ्चायतको दक्षिणी सीमानामा पर्दछ । "पूर्व-पश्चिम फैलिएको यो ताल १.५ किलोमिटर (आधा कोश) लामो छ ।"[1]

ठूलो दूधपोखरी– यो दह उहिया गाउँ पञ्चायतमा पर्दछ । यहाँ जनैपूर्णिमाको बेलामा मेला लाग्छ । निकै टाढा टाढाबाट पनि मानिसहरू मेलाभर्न आउँछन् ।

सानो दूधपोखरी– बौद्ध हिमालको दक्षिण फेदीमा रहेको यो दह खरीबोट पञ्चायतको उत्तरी छेउमा पर्छ । यहाँ पनि जनै पूर्णिमाका दिनमा मेला लाग्छ ।

नारदकुण्ड– दरौंदी नदीको मुहानमा अवस्थित यो कुण्ड पनि धार्मिक दृष्टिकोणबाट प्रसिद्ध छ । यहाँ पनि जनै पूर्णिमाको समयमा रमाइलो मेला लाग्छ ।

तातो पानी– उहिया गाउँ पञ्चायतको पूर्व पट्टि छेउमा तातो पानी छ । जाडोको समयमा पनि तातो भइरहने यो तातोपानी बूढीगण्डकीमा मिसिएको छ ।

भूलभूले खार– भूलभूले खारको पानी तातो मात्र होइन पूरै बिरेनून जस्तो बास्ना आउँछ । खोप्लाङ गाउँ पञ्चायतमा पर्ने यो तातोपानी खार खोलामा मिसिन्छ ।

## हावापानी

गोरखा जिल्लामा सामान्यतः दक्षिण पश्चिम मनसुनी हावाको प्रभाव परेको छ । यहाँको वर्षा साधारणतः जेठ महीनामा शुरू भएर असोजमा टुङ्गीन्छ । कात्तिकदेखि वैशाखसम्म अर्थात हिउँदताका पश्चिमबाट आएको जलवाष्पपूर्ण हावाले केही वर्षा गराउँछ तर मनसुनी हावाबाट हुने वर्षाको तुलनामा हिउँदे वर्षा नगन्य हुन्छ । हिमाली प्रदेश, पहाडी प्रदेश र टार तथा बेंसी जस्ता भौगोलिक विभिन्नता भएको गोरखा जिल्लाको सबै ठाउँमा एउटै प्रकारको हावापानी पाइदैन । लार्के भोटमा सँधै जाडो भइरहन्छ भने बेंसी तथा टारमा सँधै जसो गर्मी नै हुन्छ ।

करीब १,१३५ मिटर (३,७२३ फीट) अग्लो गोरखामा रहेको तापक्रम मापक यन्त्र भएको मौसम अवलोकन केन्द्रको ई. सं. १९७० को तापक्रमको अभिलेख तल प्रस्तुत गरिएको छ । यसबाट यो जिल्लाको लार्के भोट क्षेत्र र ज्यादै होचो बेंसी र खोंचको तापक्रम नदेखिए तापनि अधिकांश डाँडा पाखाका बस्तीहरूमा हुने तापक्रमको अन्दाज अवश्य हुन्छ ।

1. Sharma, Chandra K-- Geology of Nepal, 2030, Kathmandu, page 20

## तापक्रमको तालिका

(सेन्टिग्रेडमा)

| वर्ष | १९७० | | १९६८ देखि १९७० सम्म तीन वर्षको औसत | |
|---|---|---|---|---|
| महीना | अधिकतम | न्यूनतम | अधिकतम | न्यूनतम |
| जनवरी | १७.६ | ६.४ | १७.० | ६.६ |
| फेब्रुअरी | १९.६ | ७.८ | २०.२ | ८.५ |
| मार्च | २५.१ | १२.३ | २५.३ | १३.२ |
| अप्रिल | २९.४ | १६.९ | २९.३ | १७.२ |
| मे | २९.९ | १८.२ | ३०.२ | १८.६ |
| जून | २८.० | १८.४ | २८.२ | १८.८ |
| जुलाई | २७.६ | १९.१ | २७.६ | १९.३ |
| अगष्ट | २७.८ | १८.४ | २६.६ | १९.३ |
| सेप्टेम्बर | २७.६ | १८.१ | २७.१ | १८.२ |
| अक्टोबर | २६.० | १४.९ | २५.४ | १४.३ |
| नोभेम्बर | २२.८ | १०.३ | २२.६ | १०.९ |
| डिसेम्बर | १९.३ | ६.९ | १९.४ | ७.७ |
| वार्षिक औसत | २५.० | १४.० | २४.९ | १४.४ |

उपर्युक्त तालिकाको तापक्रम हेर्दा तीन वर्षको औसत अधिकतम तापक्रम २४.९ तथा न्यूनतम तापक्रम १४.४ सेण्टिग्रेड देखिन्छ। गोरखा अवलोकन केन्द्रको अनुसार १९६८ को मे महीनाको १३ तारीखमा अधिकतम तापक्रम ३४.६ र जनवरी १५ मा न्यूनतम तापक्रम ३.४ सेण्टिग्रेड थियो। त्यस्तै सन् १९६९ को मे २४-२५ मा अधिकतम ३५.० र जनवरी १५ का दिन न्यूनतम ३.७ सेण्टिग्रेड थियो। १९७० को मे १४ को दिन अधिकतम ३३.९ सेण्टिग्रेड पुगेको थियो र जनवरी १३ मा ४.३ सेन्टीग्रेडमा झरेको थियो। यसबाट के प्रष्ट हुन्छ भने गोरखा जिल्लाको पहाडी भेकमा मे महीनामा निकै गर्मी र जनवरी महीनामा जाडो हुँदोरहेछ।

यहाँको बेंसी भागमा मौसम अवलोकन केन्द्र छैन तर गोरखा जिल्लाको बेंसी र टारमा पर्ने भू-भाग छिमेकी लमजुङको बेंसी तथा टार जस्तै भएकोले करीब ८२३ मिटरको अग्लाइमा रहेको खुदी बजारस्थित तापक्रम अवलोकन केन्द्रको अभिलेख यहाँ प्रस्तुत गरिएको छ। खुदी बेंसीको हावापानी गोरखाको बेंसी भागको हावापानीसँग मिल्दोजुल्दो हुनेहुँदा ई. सं. १९६९ मा खुदी बजारमा लिइएको तलको अभिलेखबाट गोरखाको होचो भागको तापक्रम थाहा पाउन केही मद्दत मिल्ने छ।

### तापक्रमको तालिका

(सेन्टिग्रेडमा)

| वर्ष | १९६९ | | १९६८ देखि १९७० सम्म तीन वर्षको औसत | |
|---|---|---|---|---|
| महीना | अधिकतम | न्यूनतम | अधिकतम | न्यूनतम |
| जनवरी | १८.३ | ७.२ | ४१.१ | ६.८ |
| फेब्रुअरी | २१.९ | ९.५ | २१.० | ८.४ |
| मार्च | २६.७ | १४.६ | २६.० | १३.१ |
| अप्रिल | ३०.२ | १७.९ | २९.५ | १६.९ |
| मे | ३०.४ | १९.४ | ३०.९ | १८.४ |
| जून | २९.९ | २०.८ | २८.८ | २०.५ |
| जुलाई | २९.२ | २१.२ | २८.७ | २१.५ |
| अगष्ट | २८.४ | २०.८ | २८.८ | २०.९ |
| सेप्टेम्बर | २७.६ | १९.५ | २८.१ | १९.९ |
| अक्टोबर | २६.२ | १४.५ | २६.२ | १४.७ |
| नोभेम्बर | २३.५ | ११.७ | २३.५ | ११.३ |
| डिसेम्बर | २०.२ | ८.७ | २०.३ | ७.७ |
| वार्षिक औसत | २६.० | १५.५ | २५.९ | १५.० |

टार र बेंसीहरूको तापक्रम देखाउन उल्लिखित उपर्युक्त तापक्रमको तालिकाबाट तीन वर्षको सालाखाला अधिकतम तापक्रम २५.९ र न्यूनतम १५.० सेण्टिग्रेड देखिन्छ। खुदी बेंसी अवलोकन केन्द्रबाट देखिए अनुसार १९६८ को मे १३, १९६९ को मे २४ र १९७० को मे १४ का दिन अधिकतम तापक्रम क्रमशः ३४.०, ३६.१ र ३५.९ थियो। न्यूनतम तापक्रम १९६८ को जनवरी १७ मा तीन सेण्टिग्रेड, १९६९ को जनवरी १५ मा ४.५ सेण्टिग्रेड र १९७० को जनवरी १५ तथा डिसेम्बर २८ मा ६.० सेण्टिग्रेड थियो।

हिन्द महासागरमा पैदा भई समुद्रको जलवाष्प बोकी ल्याउने दक्षिण पश्चिम हावाले वर्षा याममा र भूमध्य सागरबाट उठी आउने हावाले हिउँदताका गोरखा जिल्लामा वर्षा गराउँछ। गोरखा र आरूघाटमा रहेका वर्षा अवलोकन केन्द्रहरूको अभिलेखबाट यस भेकमा हुने वर्षाको गतिविधि बुझ्न सकिन्छ। ई. सं. १९६९ र १९७० दुई वर्षको वर्षा अभिलेख यसप्रकार छः—

## वर्षाको तालिका

(मिलिमिटरमा)

| महीना | गोरखा (१,१३५ मिटर) | | आरूघाट (५४९ मिटर) | |
|---|---|---|---|---|
| | १९६९ | १९७० | १९६९ | १९७० |
| जनवरी | ११.० | २०.७ | २२.० | ६२.४ |
| फेब्रुअरी | १.६ | ३१.५ | ०.० | ७.४ |
| मार्च | ५०.६ | १६.८ | ८३.६ | १४.९ |
| अप्रिल | ५४.३ | ९०.१ | २०.२ | १४९.६ |
| मे | ७७.१ | ११२.८ | ३७.० | ४३.४ |
| जून | २०१.४ | ३००.७ | ३०५.२ | ६९१.८ |
| जुलाई | ४२५.८ | ४०१.४ | ५३१.६ | ७४४.० |
| अगष्ट | २१६.७ | ३८९.२ | ५११.४ | ५११.० |
| सेप्टेम्बर | ३१२.५ | ११६.० | ५१४.८ | ४८४.२ |
| अक्टोबर | १०.५ | १२.३ | २८.८ | ४०.० |
| नोभेम्बर | ०.४ | ०.० | १.० | ०.० |
| डिसेम्बर | ०.० | ०.० | ०.० | ०.० |
| वार्षिक औसत | १,३६२.१ | १,४९१.५ | २,०५६.२ | २,७४९.३ |

गोरखामा १९६९को सेप्टेम्बर ३ र १९७० को जुलाई १६ का दिन २४ घण्टाभित्र क्रमशः ५८.४ र १११.८ मिलिमिटर पानी परेको थियो । त्यस्तै आरुघाटमा १९६९ को जुलाई ३१ का दिन २४ घण्टा भित्र ९२.६ र १९७० को जून १६ का दिन १३२.२ मिलिमिटर पानी परेको थियो ।

माथि उल्लिखित तालिकाबाट देखिएअनुसार गोरखा जिल्लामा जूनदेखि सेप्टेम्बरसम्म ज्यादा वर्षा हुन्छ । नोभेम्बर र डिसेम्बरताका करीब दुई महीनासम्म वर्षा नै नहुने कुरा पनि उपर्युक्त तालिकाबाट देखिन्छ ।

गोरखा जिल्लामा विभिन्न स्थानको उच्चाइमा फरक परेको कारणबाट तापक्रम र वर्षामा फरक पाए जस्तै यी हावापानीबाट प्रभावित क्षेत्रहरूमा बेग्लाबेग्लै खालको हावापानी पाइनु स्वाभाविकै हो । यहाँको हावापानीलाई मोटामोटी पाँच भागमा विभाजन गर्न सकिन्छ ।

१. अति शीतप्रधान हिमाली हावापानी
२. शीतप्रधान लेकाली हावापानी
३. शीतोष्ण हावापानी
४. न्यानो शीतोष्ण हावापानी
५. अर्ध–उष्ण हावापानी

अति शीतप्रधान हिमाली हावापानी

समुद्र सतहबाट ५,००० मिटर (१६,५०० फीट) माथिको उच्चाइमा अवस्थित भू-भाग र हिमाली पर्वतहरूमा अति शीतप्रधान हिमाली हावापानीको प्रभाव परेको पाइन्छ । यो हावापानी भएका मुख्य मुख्य ठाउँहरू बौद्ध हिमाल, हिमालचुली, मनासुलु, काल्छुमा तालको सेरोफेरो, लार्के भञ्ज्याङ र ग्याला भञ्ज्याङको पाखो, शृङ्गी खोला र मवाङ खोलाका मुहानहरू, दूधपोखरी क्षेत्र तथा रूपीनाला हुन् । उपर्युक्त सबैजसो ठाउँमा सधैं हिउँ जमेको हुन्छ । हिमरेखाभन्दा माथि पर्ने यो निर्जन भागमा कुनै किसिमको वन वनस्पति हुँदैन ।

शीतप्रधान लेकाली हावापानी

हिमरेखा ५,००० मिटर (१६,५०० फीट) भन्दा मुनि र वृक्षरेखा ४,००० मिटर (१३,२०० फीट) भन्दा माथिको भागमा हिउँदमा हिउँ पर्ने र वर्षामा पनि तापक्रम निकै कम हुने हुँदा यहाँको हावापानीलाई शीतप्रधान लेकाली हावापानी भन्न सकिन्छ । यो भागमा सुनपाती, भैंगुनपाती र स-साना काँडेदार बुटाहरू उम्रेको देखिन्छ । लार्के भोटका केही बस्तीहरू, उहिया, खरीबोट, सिमजुङ, वारपाक, लाप्राक, गुम्दा, सिर्दिवास, प्रोक तथा ल्हो पञ्चायतका केही भागमा यो खालको हावापानी पाइन्छ । वर्षायाममा यो भागमा हिउँ पग्लने हुँदा केही आलु खेती गरिन्छ । भेडा–च्यांग्राको गोठहरू राखिन्छन् र चौंरी पालन पनि गरिन्छ ।

शीतोष्ण हावापानी

वृक्ष-रेखाभन्दा मुनि २,००० मिटर (६,६०० फीट) सम्मको भू-भागमा शीतोष्ण हावापानीको प्रभाव परेको हुन्छ । यो भागमा हिउँदताका निकै ठण्डा र वर्षामा शीतल हुन्छ। यस भागको उच्च स्थानहरूमा पुस-माघ महीनामा अलि अलि हिउँ पनि पर्दछ। शीतोष्ण हावापानीको प्रभाव परेको यो भागमा हराभरा कोण-धारी वन निकै पाइन्छन् ।

न्यानो शीतोष्ण हावापानी

करीब २,००० मिटर (६,६०० फीट) भन्दा मुनिको र १,२०० मिटर (४,००० फीट) भन्दा माथिको पाखा-पखेरा, फाँट, बेंसी तथा डाँडामा न्यानो शीतोष्ण हावापानीको प्रभाव परेको पाइन्छ। यो भागमा हिउँदमा केही जाडो र वर्षामा गर्मी हुन्छ । यो हावापानी भएको क्षेत्रमा जिल्लाको अधिकांश गाउँ बस्ती र खेतीपाती केन्द्रित छन् । यो भागमा मकै, कोदोको खेती धेरै गरिन्छ ।

अर्ध–उष्ण हावापानी

बूढीगण्डकी, त्रिशूली, मर्स्याङ्दी र चेपे तथा दरौंदीका आसपासमा निकै होचो खोंच परेको भागमा वर्षामा निकै गर्मी हुन्छ । अतः यो भागमा अर्ध–उष्ण हावापानीको प्रभाव परेको छ । गोरखाको अधिकांश कृषि-योग्य जमीन पनि यही भागमा रहेको छ । यहाँको समथर भागमा साल, सिसौ र सिमल तथा खयर आदिको मिश्रित जङ्गल पाइन्छ ।

## प्राकृतिक वनस्पति

विभिन्न प्रकारको हावापानीबाट प्रभावित गोरखा जिल्लाको वन्य सम्पदामा पनि विभिन्नता पाइनु स्वभाविकै हो । सामान्यतः यहाँ लेकाली वन वनस्पति, कोणधारी वन–वनस्पति र मिश्रित तथा पतझड वन-वनस्पतिहरू पाइन्छन् । हिम-रेखाभन्दा मुनि तथा वृक्ष-रेखाभन्दा माथि काँढेदार बुटाहरू र साधारण झारपात मात्र उम्रन्छन् । वृक्षरेखाको आसपासमा भैंगुनपाती, सुनपाती र स-साना धूपीका बोटहरू पनि हुन्छन् । वृक्ष-रेखा अर्थात् ४,००० मिटर (१३,२०० फीट) भन्दा केही माथि र यसको वरपर विशेष प्रकारको वन्य सम्पदा पाइन्छन् । यस भेकमा पाइने नीरमसी, जटामसी तथा पाँचऔंले आदि ज्यादै प्रसिद्ध छन् । वृक्ष-रेखाको आसपासमा पाइने जटामसी र नीरमसीको अतिरिक्त यो जिल्लाको लेकाली भागमा कुडकी, पदमचाल, अल्लो, सेतो विष, नीलोविष, यार्चागुम्बा जस्ता जरीबूटीहरू पनि पाइन्छन् । २,१३४ मिटर (७,००० फीट) देखि वृक्ष-रेखाको बीचमा सदावहार कोणधारी वन पाइन्छ । यो क्षेत्रको वन पनि निकै महत्वपूर्ण मानिन्छ । यहाँ सल्लो, गुराँस, खस्रु तथा धूपीका बोटहरू छन् । यो कोणधारी वन क्षेत्रमा निगालोधारी पनि ठाउँठाउँमा देखिन्छ । कोणधारी वनबाट तल लागेपछि यहाँका पाखा र समथर भूमिमा मिश्रित तथा पतझड जङ्गल पाइन्छन्। यी जङ्गलमा पाइने मुख्य वृक्षहरूमा साल, सिमल, खयर, चिलौने, कटुस, आँप, वर पीपल, चाँप, ओखर, धाक्रे र बुढघेंरो आदि हुन् । गोरखा जिल्लाको विभिन्न ठाउँमा पाइने अन्य वृक्षहरूमा टुनी, उतिस, लाँकुरी, समी, सिरिस, नागेश्वर, जामुनो, वेल, काफल, भलायो, असना, कर्मा, पैंयु, किम्बु आदि पनि हुन् । जिल्लाको मध्यभागतिर पाइने जरीबूटीहरू नागवेली, टिमुरे, दालचीनी, धतुरो, असुरो, लाजवन्ती, बुकीफूल, रुद्राक्ष, सतावरी, हर्रो, बर्रो, अमला तथा घोडताप्रे हुन् । यसरी विभिन्न प्रकारका वृक्ष र जरीबूटीले ढाकिएको गोरखा जिल्ला पहाडी जिल्ला भएर पनि वन्य सम्पदामा धनी छ । यस जिल्लावासीहरूको घाँस, दाउरा तथा घर कटेरो निर्माण समेत यहींको वन जङ्गलबाट सम्भव भएको छ। जिल्लाको उत्तरी भेकमा त उज्यालोको लागि बत्ती र न्यानो पार्ने साधन पनि यिनै वनका दाउरा र मूढा हुन् ।

गोरखा जिल्लाको वन सीमाना छुट्याई ब्लकहरूमा विभाजन गर्ने काम भएको छैन । यहाँको वन जङ्गल अतिक्रमण भएको पाइँदैन । तर केही वस्तीहरूमा खोरिया फाँडेर खेती गरेको र बारीको छेउछाउमा पर्ने वन अलि अलि मिचेको देखिन्छ। यो जिल्लाका बनहरू यत्रतत्र छरिएका छन्। धेरैजसो पञ्चायतहरूले आ-आफ्नो क्षेत्रमा पर्ने वन क्षेत्रको चार किल्ला खोली पुर्जी लिइसकेका छन् । पञ्चायतको माध्यमबाट पनि यी वनहरूको संरक्षण भएको छ ।

## पशु-पक्षी

दक्षिणपट्टिको गर्मी भू-भागदेखि लार्के भोटसम्म फैलिएको गोरखा जिल्लामा अनेक प्रकारका वन्य पशु-पक्षीहरू पाइन्छन् । यहाँ पाइने वन्य पशुहरूमा बाघ, भालू, चितुवा, घोरल, झारल, मृग, कस्तूरी, थार, वन चौंरी, स्याल, खरायो, दुम्सी, वन बिरालो, नावर, बादर आदि हुन् र पक्षीहरूमा ढुकुर, जुरेली, मलेवा, कोइली, हलेसो, धनेष, बाज, ठेउवा, फिष्टु, रानीचरी आदि हुन् । संरक्षणको लागि खास केही कार्यक्रम भएको पाइँदैन ।

## खनिज पदार्थ

गोरखा जिल्लाको कतिपय पञ्चायत क्षेत्रमा तामा, अभ्रख, कोइला, फटकिरी, वीरेनून, फलाम

आदि खनिजपदार्थहरू भएको अनुमान गरिए तापनि संगठित रूपबाट खानी झिक्न र सर्वेक्षण एवं सम्भाव्यता अध्ययन भएको पाइँदैन । घर छाउने ढुङ्गा तथा चून ढुङ्गा स्थानीय जनश्रमबाट स्थानीय आवश्यकता पूर्तिको लागि प्रयोगमा ल्याएको देखिन्छ । खार खोलाको तातोपानी क्षेत्रमा बीरेनून खानीको सम्भावना छ तर विशेषज्ञहरूबाट यसको मूल्याङ्कन हुन बाँकी नै छ । जराङ खोला र ताल खोलाको मुहानतिरको तामा खानीमा राम्रो तामा पाइएकोले स्थानीय कामीहरूलाई ठेक्का दिइएको थियो । हाल यो ठेक्का पट्टा बन्द छ ।

यस जिल्लाको विभिन्न स्थानमा चून ढुङ्गा पाइएको छ र स्थानीय मानिसहरूले प्रयोगमा पनि ल्याएका छन् । त्यस्तै घर छाउने ढुङ्गा पनि धेरै ठाउँमा पाइएको छ । प्रयोगमा ल्याइएका केही स्लेट ढुङ्गा र सम्भावित तामा खानीको विवरण यसप्रकार छः–

| खानीको नाम | | पञ्चायत | सम्भावित तामा खानी | | पञ्चायत |
|---|---|---|---|---|---|
| आरवाङ | ढुङ्गाखानी | आरू आरवाङ | ग्याजी | तामाखानी | ताकु कोट |
| सुन्तले | ढुङ्गाखानी | खोपलाङ | कोजे | तामाखानी | वारपाक |
| सिरान डाँडा | ढुङ्गाखानी | सिमजङ | अँधेरी खोला | तामाखानी | सौरपानी |
| ढाँडबेसी | ढुङ्गाखानी | बोरलाङ | औलेमाडी | तामाखानी | मुचोक |
| लौसी चौर | ढुङ्गाखानी | भीरकोट | चित्रे | तामाखानी | छोप्राक |
| हिकलुङ | ढुङ्गाखानी | मुचोक | देवीथान | तामाखानी | भुमलीचोक |
| | | | धाचे | तामाखानी | रानीस्वाँरा |
| पाखुरी | ढुङ्गाखानी | सातबीस थुमी | हुँडीखोला | तामाखानी | दरभुङ |
| पाण्डे गाउँ | ढुङ्गाखानी | धुवाँकोट | | | |

# ऐतिहासिक पृष्ठभूमि

गोरखा जिल्ला प्राचीनकालमा नेपालका लिच्छवि शासकहरूको अधीनमा थियो । मानदेव प्रथमको ई. सं. ४६४ को चाँगु अभिलेखमा गण्डकी पारीको मल्ल पुरी जितेको वयान छ । त्यस्तै शिवदेव द्वितीय र जयदेव द्वितीयका अभिलेखहरू गोरखामा पाइएका छन् ।[1] लिच्छवि अभिलेखहरू ठाउँ ठाउँमा बिग्रेको हुँदा उक्त बेला गोरखाको के नाम थियो भन्न सकिएको छैन । जयदेव द्वितीयको अभिलेखमा गोरखा इलाकालाई "जनपद" भनि उल्लेख गरिएको छ । 'जनपद' भन्नाले सामन्ती इलाका नभई केन्द्रबाट शासित इलाका भनेर बुझिन्छ ।

ऐतिहासिक दृष्टिकोणबाट यस ठाउँको नाम योगी गोरखनाथबाट गोरखा भएको देखिन्छ । एघारौं शताब्दीसम्म काठमाडौं उपत्यकाका शासकहरूका अधीनमा गुल्मी र लमजुङ भएको हुँदा गोरखा पनि काठमाडौं उपत्यकाको अधीनमा रहेको देखिन्छ । पश्चिममा खशिया मल्लहरूको चकचको हुँदा गोरखा जिल्ला ती खशिया मल्लहरूका अधीनमा थियो । खशिया मल्ल राजा अभय मल्लको अभिलेख गोरखामा पाइएको छ । खशिया मल्लहरूले करीब दशौं शताब्दीदेखि चौधौं शताब्दीसम्म राज्य गरेका थिए । खशिया मल्लहरूको पतन भएपछि खशिया मल्ल राज्य टुक्रिंदै गयो ।

ईशा संवत्को सोह्रौं शताब्दीको पूर्वार्द्धमा गोरखा कोटमा खड्काहरू राज्य गर्दथे । तत्कालीन लमजुङ राजा यशोब्रम्ह शाहका छोराहरूमध्ये नरहरि शाह लमजुङका राजा भए र द्रव्य शाह गोरखातिर लागे। त्यस्ताक गोरखाको लिगलिगमा घलेहरूको राजकाज थियो । घलेहरूको लिगलिग आफ्नो अधीनमा लिएपछि गोरखाकोटतर्फ द्रव्य शाहको दृष्टि पर्‍यो । गोरखाली खड्काहरूसित द्रव्य शाहले पहिलोपटक हार मान्नु परेतापनि ई.सं. १५५९मा विजय प्राप्त भयो र द्रव्य शाहकै हातबाट खड्का राजाको मृत्यु भयो ।[2] यस युद्धमा द्रव्य शाहले भगीरथ पन्त, गणेश पाण्डे, गङ्गाराम राना, नारायण अर्याल, सर्वेश्वर खनाल, केशव वोहोरा तथा मूर्ति खवास आदि गोरखाली नागरिकहरूको सहायता पाएका थिए । गोरखा र लमजुङको राज्य व्यवस्था सम्बन्धलाई लिएर द्रव्य शाह र नरहरि शाहको बीचमा आपसी वैमनस्य सिर्जना भए तापनि आमाको मध्यस्थताबाट दुई राज्यको सीमाना निश्चित गरी गोरखालाई स्वतन्त्रता दिइयो । तत्पश्चात् द्रव्य शाहले आफ्नो राज्य विस्तार

---

१. तुलसीराम वैद्य र धनवज्र वज्राचार्य (सं.)–गोरखाको ऐतिहासिक सामग्री, नेपाल अध्ययन संस्थान, २०२८, पृष्ठ ११–१४

२. बालचन्द्र शर्मा– नेपालको ऐतिहासिक रूपरेखा, वि. सं. २०२७, पृष्ठ २१०

गर्ने सिलसिलामा सिरानचोक र अजीरगढ पनि विजय गरे । आफ्नी आमा दिवंगत भएपछि नरहरि शाहले भाइ द्रव्य शाहको गोरखामाथि पुनः कुदृष्टि दिन थाले । आपसी रीस, इबी र षड्यन्त्र चली नै रहे । एघार वर्षसम्म राज्य गरी ई. सं. १५७० मा गोरखाका श्रष्टा द्रव्य शाहको मृत्यु भयो । त्यसपछि पूर्ण शाह (पुरन्दर शाह) गोरखाका राजा भए । पुरन्दर शाहको शासनकालमा पनि लमजुङसित लडाईं भइरहृयो । वारपाकका शासकसित पनि लड़ाईं भयो र यस लडाईंको असरको रूपमा गोरखामा वारपाकबाट आउने नून र पाखी बन्द भयो । गोरखालीहरूले दुःख पाए। उक्त समयमा लमजुङ र तनहूँ बीच लडाईं भइरहेको हुनाले तनहूँका शासकले गोरखाका राजा पुरन्दर शाहलाई हात्ती सौगात पठाई मित्रता कायम गरे । यस प्रकार गोरखा राज्यको महत्व बढ्यो । वरपाकका शासनसित पनि मित्रता कायम गरी वर्षको एक्काईस मुरी नून गोरखा राज्यमा पठाउने वारपाकका शासकले वाचा गरे ।[1] पुरन्दर शाहले ई. सं. १५७० देखि १६०५ सम्म शासन गरे ।[2] त्यसपछि उनका छोरा छत्र शाह गोरखाका राजा भए । वंशावली अनुसार उक्त राजा १६०५–१६०६ मा राजा भएको देखिन्छ तर पुरातात्विक सामग्री अनुसार छत्र शाह ई. सं. १६०९ मा गोरखाका राजा थिए । गोरखा दरबार रङ्गमहलमा रहेका दुईवटा ठूल ठूला नगराहरूमध्ये एक नगरामा "श्रीशाके १५३१ (ई. सं. १६०९) मासे ५ श्री महाराज छत्र साहस्यकृति" भनी अभिलेख कुँदिएको छ ।[3] यस प्रकार वंशावलीमा लेखिएको कुरा र पुरातात्विक सामग्रीमा मेल खाँदैन ।

छत्र शाह निःसन्तान भई परलोक भएपछि उनका भाइ राम शाह गोरखाको राजगद्दीमा ई.सं. १६०९ मा बसे । राम शाहले माना पाथीको व्यवस्था मात्र गरेन र, ऋण दिने लिने सम्बन्धमा ब्याज दरको पनि निश्चित नियम बनाए । यिनले पानी पँधेरो, राजस्व, गौचर, बाटोघाटो, शासन व्यवस्था, न्याय कानून, दरबारी चलन तथा कतिपय सामाजिक एवम् आर्थिक नियमहरू बनाए र जनतालाई सुविधा पुऱ्याएका थिए । पहाडी प्रदेशको अनिश्चित राजनैतिक अवस्थामा राम शाहले बनाएका दैनिक जीवनोपयोगी पञ्चायती परिपाटी, राज्य प्रशासन, विदेश नीति, गृहनीति, कृषि तथा वाणिज्य नीतिहरू निकै लोकप्रिय भए ।[4] छिमेकी राजाहरूले पनि राम शाहका थितिहरूमा उपयोगिता अनुभव गरेर उनको प्रशंसा गरेको कुरा गोरखा वंशावलीमा पाइन्छ ।

राम शाहको पालामा गोरखा र लमजुङको सम्बन्ध त्यति राम्रो हुन नसके तापनि अन्य छिमेकी तथा काठमाडौं उपत्यकाका राज्यहरूसितको सम्बन्ध मैत्रीपूर्ण भएको थियो । गोरखा तथा ललितपुरको प्रथम सम्बन्ध राम शाहका पालामा भएको थियो ।[5] राम शाहले आन्तरिक सामाजिक व्यवस्था र अन्य राज्यहरूसँग मैत्रीपूर्ण व्यवस्थामात्र गरेका होइनन्, यिनको पालामा गोरखा राज्यको सीमाना पनि निकै फैलिएको थियो । मझुवा, वारपाक, स्यार्तान, अठारसय खोला, सल्यानकोट, चरङ्गे, निभारचोक, धादिङ, फिर्के तथा रुद्रभोट आदि स्थानमा राम शाहको प्रभुत्व कायम भयो । राजा राम शाहको समयदेखि गोरखालीहरू काठमाडौं

---

१. योगी नरहरिनाथ (सं.) – गोरखा वंशावली, आर्यवीर संघ, काशी, २०२१, पृष्ठ ७
२. ऐजन, पृष्ठ ८
३. तुलसीराम वैद्य र धनवज्र वज्राचार्य (सं.) को माथि उल्लिखित किताब, पृष्ठ १४
४. योगी नरहरिनाथ (सं.) – गोरखा वंशावली, पृष्ठ २०–२६
५. सूर्य विक्रम ज्ञवाली – नेपाल उपत्यकाको मध्यकालीन इतिहास, रायल नेपाल एकेडेमी, २०१९, पृष्ठ १९४; योगी नरहरिनाथ (सं.) – इतिहास प्रकाश, अङ्क २ भाग ३, पृष्ठ ४२५

उपत्यकाको राजनीतिमा विशेष चाख लिन थाले । यही कारण ललितपुरका राजा सिद्धिनरसिंह र कान्तिपुरका राजा प्रताप मल्लका बीचमा युद्ध हुँदा गोरखाले ललितपुरलाई सैनिक मद्दत दिएको थियो ।

लमजुङसँग पनि पटक पटक युद्ध भइरहन्थ्यो । लमजुङले उचालेकोले घलेहरूबाट कति छल-कपट भोग्नु पऱ्यो । तर साहसी र महत्वाकांक्षी राम शाहले आफ्नो राज्य विस्तार गर्न छोडेनन् । राम शाहले त्रिशूली उपत्यकाको उत्तरपट्टि केरुङ र कुकुरघाटसम्म पनि आफ्नो अधिकार जमाएका थिए । यो युद्धमा सरदार भवानी पाण्डेले ज्यानै गुमाउन पऱ्यो तापनि यसबाट गोरखाको वाणिज्य व्यापारको उत्तरी मूलद्वार खुल्न गएको थियो । त्यसताका गोरखाको परिधि मर्स्याङ्दीदेखि त्रिशूलीसम्म फैलिएको थियो । करीब १,००० वर्ग माइलको गोरखा राज्य स्थापना गरी समाज सुधारक राजा राम शाह ई. सं. १६३६ मा परमधाम भए । "न्याय खोज्न गोरखा जानु" भन्ने लोकोक्तिबाट नेपाली जनतामा राम शाहको स्मृति सधैं ताजा हुन्छ । गोरखा राज्यको विकास र विस्तार कसरी भयो भन्ने सन्दर्भमा राम शाहले व्यवस्था गरेका आर्थिक, न्यायिक, सामाजिक, धार्मिक तथा राजनैतिक विभिन्न २६ किसिमका थितिहरूको कारण देखाइएको छ ।[१] नेपाल अधिराज्यको एकीकरण गर्ने काममा राम शाहलाई अग्रदूत मान्न सकिन्छ । राजा राम शाहले ई. सं. १६०६ देखि १६३६ सम्म शासन गरेको देखिन्छ ।

राम शाहपछि डम्बर शाह गोरखाका राजा भए । राजा डम्बर शाहले ललितपुरका राजा सिद्धिनरसिंहलाई कान्तिपुरका राजा प्रताप मल्लको विरुद्ध सैनिक मद्दत गरेका थिए । यी राजाका पुरातात्विक सामग्रीहरू वि. सं. १६९९ देखि १७०८ सम्मका पाइएका छन् ।[२] डम्बर शाह पछि कृष्ण शाह गोरखाका राजा भए । कृष्ण शाहको शासनकालमा (ई. सं. १६५६) "चौर पञ्चाशिका" लेखिएको थियो ।[३] यी राजाको मृत्यु पछि यिनका छोरा रुद्र शाह गोरखाका राजा भए । उक्त बेला गोरखाको आर्थिक अवस्था राम्रो थिएन । यसैकारण रुद्र शाहले वि. सं. १७३० मा पतिमन उपाध्यायसँग सयकडा साढे बाह्र ब्याज तिर्ने गरी रू. १२०। सापट लिएका थिए ।[४] रुद्र शाह पछि पृथ्वीपति शाह राजा भए ।

यिनको शासनकालमा पुरानो शत्रु लमजुङले चेपे सीमाना छोडेर दरौंदीको किनारसम्म आफ्नो अधिकार जमायो तर पछि पृथ्वीपति शाहका छोरा रणदुल्ल शाहको चलाखी र वीरताबाट लमजुङले पुरानो सीमानामा फर्कन पऱ्यो । पृथ्वीपति शाहले गोरखा राज्यको सैनिकशक्ति अरू मजबुत बनाए । यी राजाले काठमाडौंमा दुई चोटी आई कान्तिपुरका राजा नृपेन्द्र मल्ल र पार्थिवेन्द्र मल्लसँग मितियारी लगाए । काठमाडौं उपत्यकाको राजनीतिमा पृथ्वीपति शाहले प्रभावशाली भूमिका खेले । गोरखा राज्यलाई शक्तिशाली बनाउनमा पृथ्वीपति शाहको ठूलो देन छ । यिनैको पालामा राजकुमार चन्द्र रूप शाहले एक ठूलो तोप बनाएका थिए । युवराज वीरभद्र शाह आफ्नो बाबुकै शासनकालमा मृत्यु भएको बेला उनकी रानी माइती (तनहूँ) मा थिइन् । तनहूँमा नै युवराज नरभूपाल शाहको जन्म भएको थियो । तनहूँबाट युवराज नरभूपाल शाहलाई गोरखामा नपठाउँदा

---

१. योगी नरहरिनाथ (सं.)–इतिहास प्रकाश, अङ्क २ भाग ३, पृष्ठ ४१९–२५
२. दिनेश राज पन्त– डम्बर शाहको राज्यकालमा एक विचार, पूर्णिमा, पूर्णाङ्क ३१, पृष्ठ १७१–८३
३. तुलसीराम वैद्य र धनवज्र वज्राचार्य (सं.)को–माथि उल्लिखित कताब, पृष्ठ ३३
४. रामजी तिवारी आदि (सं.)–ऐतिहासिक पत्र संग्रह, भाग दोस्रो, पृष्ठ १०–१५

गोरखाका राजकुमार चन्द्ररूप शाहले चलाखी साथ युवराजलाई गोरखामा ल्याए । तत्पश्चात ई. सं. १७१६ मा पृथ्वीपति शाहका नाति नरभूपाल शाहले गोरखाको राजकाज गर्न थाले । यिनको पालामा पनि लमजुङले तनहुँको मद्दत लिएर गोरखामाथि आक्रमण गऱ्यो । परन्तु नरभूपाल शाहले यो आक्रमण विफल तुल्याइदिए ।

नरभूपाल शाह पनि उत्साही र महत्वाकांक्षी राजा थिए । यिनी बागमती उपत्यकालाई लक्ष गर्दै पूर्वतिर बढ्न थाले । काजी जयन्त राना मगर र महेश्वर पन्तको नेतृत्वमा गएका फौजले ई. सं. १७३७ मा नुवाकोटमाथि आक्रमण गरे तर असफल भए । नुवाकोट पराजयबाट नरभूपाल शाहमा केही खिन्नता आयो । उनी बढी पूजा पाठ र धर्म कर्ममा समय दिने भए । रानी चन्द्र प्रभावतीको सहयोगबाट राज्यको सुरक्षा र प्रशासन सम्भव भयो । ई. सं. १७४३ मा नरभूपाल शाहको स्वर्गवास भयो र त्यसपछि युवराज पृथ्वीनारायण शाह गोरखाको राजगद्दीमा बसे ।

ई. सं. १७२३ मा नरभूपाल शाहकी माहिली रानी कौशल्यावतीको गर्भबाट शाहवंशका ज्योतिर्मय गहना तथा नेपाल राज्यका श्रष्टा पृथ्वीनारायण शाहको जन्म भएको थियो । पृथ्वीनारायण शाह बालक कालदेखि नै प्रतिभाशाली थिए । बाल्यकालमा नै यिनी चतुर, प्रभावशाली र होनहार थिए । द्रव्य शाह, राम शाह र नरभूपाल शाहले थालेको राज्य विस्तार गर्ने कार्य पृथ्वीनारायण शाहले विशाल नेपालको सिर्जना गरी पूरा गरे ।

कुशल राजनीतिज्ञ, कूटनीतिज्ञ, सूर-वीर, महत्वाकांक्षी, पृथ्वीनारायण शाहको पौरखबाट नेपाल र नेपालीको अस्तित्वको बीजारोपण भएको हो । प्रत्येक नेपाली राष्ट्रनिर्माता पृथ्वीनारायण शाहको आभारी छ । गोरखा, जहाँबाट आधुनिक नेपालको इतिहास आरम्भ हुन्छ, हाम्रो गौरवको प्रतीक हो । गोरखा, जहाँबाट नेपाल र नेपालीको सम्बर्धन र विस्तारको लागि शाह वंशको संगठित नेतृत्व प्राप्त भयो हाम्रो एकताको प्रतीक हो । अतः गोरखा, शाहवंश र नेपाली इतिहास अन्योन्याश्रित रहिआएका छन्, नेपाल र नेपालीको संरक्षक भइआएका छन् ।

## मन्दिर, गुम्बा, कोट र गुफाहरू

विशाल नेपालको स्रोत यो गोरखामा कैयन् पुरातात्विक महत्वका कोटहरू छन् । इष्ट देवता गोरखनाथको थलो यो गोरखामा कैयन् महत्वपूर्ण मन्दिरहरू छन् । लार्के भोट र लेकाली बस्तीभरि हिमाली जातिले बसोबास गरेको गोरखामा कैयन् गुम्बा र घ्याङहरू छन् । महान् ऋषिमुनिहरूले तपस्या गरेको हिमाली शृङ्खलाको काखमा अवस्थित गोरखामा कैयन् पवित्र गुफाहरू छन् । यो कोट, मन्दिर, गुम्बा र गुफाहरूमध्ये अद्यापि महत्वपूर्ण मानिएका केही यहाँ उल्लेख गरिएका छन् ।

**पुरातात्विक स्थानहरू**

(१) गोरखादरबार (२) पोखरी थोक (३) भीमसेन थापाको घडेरी (४) बारपाक कोट (५) सिरानचोक कोट (६) लिगलिग कोट (७) उपल्लो कोट (८) धुवाँकोट र अरू कोटहरू

**मुख्य मन्दिरहरू**

(१) गोरखकाली (२) गोरखनाथ (३) मनकामना (४) महादेव मन्दिर, पोखरी थोक (५) विष्णु मन्दिर (६) गणेश मन्दिर, पोखरी थोक (७) हनुमान ढोका (८) राम मन्दिर, खोपलाङ (९) शिवालय लुइँटेल (१०) भीमसेन मन्दिर, आरुघाट (११) कोट काली, आरुघाट (१२) कामधेनु, गाईखुर ।

**मुख्य गुम्बाहरू**

(१) नामला गुम्बा, नामरुङ (२) कर्जुछिलिङ, सामागाउँ (३) ऋङ्गी गुम्बा, प्रोक गाउँ (४) मनासलु गुम्बा, ह्लो गाउँ ।

**मुख्य गुफाहरू**

(१) गोरखनाथ गुफा, गोरखा (२) सीता गुफा, सुलीकोट (३) सिद्ध गुफा, ध्यालचोक (४) वक्रेश्वर गुफा, मनकामना ।

# प्रमुख स्थानहरू

## पोखरीथोक

गोरखा जिल्लाको सदरमुकाम करीब १,५२४ मिटर (५,००० फीट) अग्लो पोखरीथोकमा रहेको छ। कालिका मन्दिर तथा गोरखनाथको दक्षिणपट्टि पाखोमा अवस्थित पोखरीथोक यस भेकको सबैभन्दा रमणीय ठाउँ हो। यहाँबाट दक्षिणतिर पर्ने वक्रेश्वरको डाँडो मनकामनाको श्रृङ्खला ज्यादै राम्रो देखिन्छ। पोखरीथोकको वरपरबाट बेंसीमा नागबेली परेर बग्ने दरौंदीको सुन्दर दृश्य देखिन्छ भने लेकतिर अग्ला डाँडा र भञ्ज्याङहरू। यहाँबाट धवलागिरि, अन्नपूर्ण, माछापुछ्रे, लमजुङ हिमाल, मनासुलु, हिमालचुली, बौद्ध हिमाल, श्रृङ्गी हिमाल र गणेश हिमालको मनमोहक दृश्यावलोकन गर्न सकिन्छ। यो ठाउँको हावापानी स्वास्थ्यकर छ।

यो ठाउँमा पोखरीथोक, पाटेचौर र छिपटोल धारापानी गरी तीनवटा बजार छन्। यी तीनैवटा बजारमा करीब २०० जति घरहरू छन्। यहाँ कपडा, खाद्यान्न पसल, भाँडा पसल, बाँडा पसल र किराना माल पसलहरू छन्। गोरखाको पुरानो टुँडिखेल यहीं ठाउँमा छ। यसको अतिरिक्त रानीपोखरी, सोह्रखुट्टे पाटी तथा नारायण आदि मन्दिरहरू पोखरीथोकमा नै छन्। यहाँ एउटा पुरानो दरबार पनि छ।

पोखरीथोक र यसको आसपासमा अवस्थित गुफा, मन्दिर र थलीबाट थालनी भएको हो आधुनिक नेपालको इतिहास।

प्रमुख जिल्ला अधिकारीको कार्यालय र जिल्ला पञ्चायत लगायत सबैजसो जिल्लास्तरीय सरकारी एवं अर्ध-सरकारी कार्यालयहरू पोखरीथोकमा रहेका छन्। यहाँ एक माध्यमिक विद्यालय र १५ शय्याको अस्पताल पनि छन्। यो ठाउँ गोरखकाली र रानीस्वाँरा पञ्चायतमा पर्दछ र यहाँको जनसंख्या ४,८३२ छ।

## बारपाक

दरौंदी नदीको पूर्वपट्टि भेकमा बारपाक पर्दछ। मसेल दोभानबाट लाँकुरी बोट तथा सौरपानी हुँदै उत्तर गएपछि यहाँ एउटा ठूलो घले–गुरुङ गाउँ छ। डाँडाको थलीमा अवस्थित यो घले–गुरुङ गाउँ ज्यादै सफा र सुन्दर छ। दोस्रो महायुद्धमा भी. सी. पाउने गजे घलेको यो बारपाकले कैयन् लडाका बीरहरू जन्मायो। अहिले पनि यहाँका गुरुङ युवकहरू स्वदेश र विदेशको सैनिक सेवामा प्रशस्त छन्। यो गाउँको प्राय: प्रत्येक घरमा एकजना पेन्सनवाला र एक जना बहालवाला लाहुरे छन्। यो गाउँको परम्परागत गुरुङ संस्कृतिलाई बाह्य प्रभावले अझै छुन सकेको छैन। यहाँका केटाकेटीहरू सानै उमेरदेखि रोदीघरमा भेला हुने र घाँटु नाच्ने गर्दछन्।

यो ठाउँमा लेकाली हावापानी छ । यहाँ धान खेती गर्ने ठाउँको अभाव छ । आलु, मकै, कोदो, फापर आदि पाखेबाली लगाइन्छन् । यहाँको घले गुरुङहरू भेडा पाल्दछन्। यिनै भेडाबाट प्राप्त ऊनबाट राडी, पाखी र बख्खु पनि बुन्दछन् । यहाँ एक अतिरिक्त हुलाक र एक प्राथमिक विद्यालय छन् । यहाँको जनसंख्या १,८९० छ ।

## आरूघाट बजार

काठमाडौंबाट पोखरा जाने पुरानो मूलबाटोमा पर्ने आरुघाट बजार बूढीगण्डकीको तिरमा अवस्थित छ । यहाँ कपडा पसल र अन्य किराना पसल गरी करीब एक सय घरहरू छन् । बूढीगण्डकीको पुलको मुखमा रहेको यो बजार यस भेकका लेकाली वस्तीहरूको वाणिज्य केन्द्र भइआएको छ । बूढी गण्डकीको तीरैतीर लार्के भोट जाने बाटो पनि यही बजारबाट उत्तर लाग्छ । यो बजार आरु चनौटे गाउँ पञ्चायतमा पर्दछ र यहाँको जनसंख्या २,२५१ छ । यहाँ एक छोटी हुलाक, एक स्वास्थ्य चौकी र एक माध्यमिक विद्यालय छन् । आसपासका गाउँहरूमा क्षेत्री, बाहुन र गुरुङहरूको संख्या ज्यादा भएतापनि आरुघाट बजारमा नेवारहरूको आधिक्य पाइन्छ।

## खानचोक

आरुघाटबाट मोदी खोलाखोलै पश्चिम लागेपछि यसको मुहानमा खानचोक पर्दछ । पुरानो पूर्व-पश्चिम बाटोमा पर्ने यो खान्चोकमा केही भट्टी र पसलहरू भएको सानो बजार छ । यो ठाउँमा पाखो पखेरो र सुख्खा बारी भएकोले मकै, कोदो आदि पाखेवाली ज्यादा हुन्छ । यहाँ सानो खानचोकमा एक अतिरिक्त हुलाक छ । खानचोक घ्याम्पेसालमा एक स्वास्थ्य चौकी पनि छ ।

## खोपलाङ बजार

चोरकाटे टारमा दरौंदीको नयाँ साँगु तरेर पश्चिम लागेपछि खोपलाङ बजार पुगिन्छ । यो पनि पोखरा जाने पुरानो मूलबाटोमा पर्दछ । खोपलाङमा केही वर्ष पहिलेसम्म ठूलै बजार थियो । अहिले यहाँका बजारियाहरू ठाँटी पोखरी तथा आलपासका समथर भू-भागतिर झर्न थालेकाले खोपलाङ बजारको चहलपहल घटेको छ । पृथ्वीराजमार्ग खुलेदेखि खोपलाङको बाटोगरी हिंड्ने यात्रुहरूको संख्या पनि निकै कम भएको छ । खोपलाङ पञ्चायतको जनसंख्या ३,६९९ छ । यो पञ्चायतमा तीनवटा प्राथमिक विद्यालयहरू छन् ।

## ठाँटी पोखरी

खोपलाङबाट पश्चिमपट्टि पालुङटारको उत्तरमा ठाँटी पोखरी पर्दछ । ठाँटी पोखरी साधारण टार थियो । गर्मी र औलोको कारणले पातलो बस्ती भएको ठाँटी पोखरीमा पालुङटारमा विमानस्थल बनेर हवाइ सेवा चालू भएपछि विशेष चहलपहल थपियो । यस भेकबाट औलो उन्मूलन भएकोले वरपरका डाँडा र भञ्ज्याङमा बस्नेहरू ठाँटी पोखरीतर्फ झर्न थाले । यस भेकका भूतपूर्व सैनिकहरूको लागि यहाँ पेन्सन क्याम्प खुलेपछि र शाही नेपाल वायु सेवा निगमले आफ्नो कार्यालय पनि यही ठाउँमा राखेपछि ठाँटी पोखरीको महत्व झन् झन् बढ्न थाल्यो । अहिले यहाँ सानो बजार भइसकेको छ । आसपासको फराकिलो टार पनि गुल्जार हुँदैछ । ठाँटी पोखरीबाट दक्षिणपट्टि क्रमशः पालुङटार, गाईखुरटार तथा च्याङ्लीटारहरू छन् । चेपे नदीबाट नहर

ल्याएर ठाँटी पोखरी र अन्य टारहरूको सिचाइ गर्न सकिने देखिन्छ। यहाँबाट केही पश्चिमपट्टि चेपे र मर्स्याङ्दी बगेका छन्। ठाँटी पोखरीको सेरोफेरो पालुङटार पञ्चायत अन्तर्गत पर्दछ। यहाँको जनसंख्या ४,९२४ छ। यो पञ्चायतमा तीन वटा प्राथमिक विद्यालय, एउटा प्रारम्भिक विद्यालय, एउटा निम्न माध्यमिक विद्यालय र एउटा माध्यमिक विद्यालय छन्।

यसको अतिरिक्त जिल्ला प्रमुख आयुर्वेदिक औषधालय, प्रहरी थाना, टेलिफोन कार्यालय, शाही वायु सेवा निगमको कार्यालय, ब्रिटिश पेन्सन क्याम्प र भारतीय पेन्सन क्याम्प समेत छन्।

## आँपपीपल

ठाँटी पोखरीभन्दा उत्तर तथा हर्मीभन्दा दक्षिणपट्टि आँपपीपल पर्दछ। गोरखा जिल्लाका रमणीय स्थानहरूमध्ये आँपपीपल भञ्ज्याङ पनि एक हो। यो भञ्ज्याङको दक्षिणपट्टि १,४३२ मिटर अर्थात ४,७०० फीट अग्लो रीप डाँडो पर्दछ। यहाँको हवापानी ज्यादै स्वास्थ्यकर छ। यहाँ १५ शय्याको एक मिशन अस्पताल र यस अन्तर्गत केही क्लिनिकहरू खोलिएका छन्। २,६०१ जनसंख्या भएको आँपपीपल पञ्चायतमा तीनवटा प्राथमिक विद्यालय र एउटा निम्न माध्यमिक विद्यालय छन्। आँपपीपलमा एउटा पुस्तकालय र एउटा छोटी हुलाक पनि छन्।

## अन्य स्थानहरू

मनकामना, छेपेटार, तारानगर, श्रृङ्गी गुफा, लिगलिग, हर्मी, बाह्रपिके, नारद कुण्ड, दूध पोखरी, लार्के भञ्ज्याङ आदि ठाउँहरूमा पनि केही स्थानीय विशेषताहरू छन्। कहीं देवदेवीका प्रसिद्ध मन्दिर छन् भने कहीं पवित्र तीर्थ स्थल। कहीं फराकिला टार छन् भने कहीं स-साना बजार। यो जिल्लाका विभिन्न नदीको छेउछाउमा रहेका घाटहरूमा समय समयमा मेला लाग्ने हुँदा यी ठाउँलाई पनि स्थानीय प्रमुख स्थान मान्न सकिन्छ।

# जनसंख्या र जनजीवन

## जनसंख्या

वि. सं. २०२८ सालमा श्री ५ को सरकार, तथ्याङ्क विभागबाट लिइएको जनगणना अनुसार गोरखा जिल्लाको कुल जनसंख्या १,७८,२६५ छ । यसमध्ये ८८,७०६ पुरुष र ८९,५५९ महिला छन्। छिमेकी जिल्ला तनहुँमा जस्तै गोरखामा पनि पुरुषभन्दा महिलाहरू ज्यादा रहेछन् भन्ने कुरा माथिको तथ्याङ्कबाट प्रष्ट हुन्छ। गण्डकी अञ्चलको कुल जनसंख्याको १७.४ प्रतिशत मानिसहरू यस जिल्लामा बसोबास गर्दछन्। जनसंख्याको दृष्टिबाट गण्डकी अंचलका अरू छ जिल्लासित तुलना गर्दा गोरखा जिल्ला दोस्रो सबैभन्दा बढी जनसंख्या भएको जिल्ला देखिन्छ अथवा बढी जनसंख्या हुनेमा स्याङ्जा पछि गोरखाको स्थान छ । नेपाल अधिराज्यका ७५ जिल्लाको जनसंख्यालाई हेर्दा गोरखाको स्थान बाईसौं हुन आउँछ । यो जिल्लाको कुल क्षेत्रफल २,५०५ वर्ग किलोमिटर छ । यहांको जनघनत्व ७१ व्यक्ति प्रतिवर्ग किलोमिटर हुन आउँछ ।

गोरखा जिल्लामा मानिसहरू बसोबास गरेको जम्मा घर परिवारको संख्या ३२,२४६ देखिएको छ । अन्य पहाडी जिल्लाहरूमा जस्तै यहाँ पनि घटीमा एक जना सदस्य तथा बढीमा बीस जनाभन्दा पनि केही बढी सदस्य भएका परिवारहरू छन् । २०२८ सालको जनगणनामा उल्लिखित पारिवारिक बनोट हेर्दा पाँच जना सदस्य भएको परिवार संख्या सबैभन्दा बढी अर्थात् ५,१५५ छ । जिल्लाको कुल जनसंख्याको हिसाब गर्दा प्रति परिवारमा सालाखाला पाँच व्यक्ति पर्न आउँछ ।

यो जिल्लाको कुल जनसंख्यामध्ये विद्यालय जान नसक्ने केटाकेटी, विद्यालय तथा महाविद्यालय जाने र आर्थिक दृष्टिबाट सक्षम तथा आश्रित मानिसहरूलाई विभिन्न उमेर समूहमा विभाजन गर्दा त्यसको रूपरेखा यस्तो देखिन्छ :–

उमेर समूहको तालिका

| | पुरुष | | महिला | | जम्मा | |
|---|---|---|---|---|---|---|
| उमेर समूह | संख्या | प्रतिशत | संख्या | प्रतिशत | संख्या | प्रतिशत |
| ०–५ | १४,८५६ | १६.७ | १५,६५० | १७.५ | ३०,५०६ | १७.१ |
| ६–१५ | २३,३६३ | २६.४ | २१,५६५ | २४.२ | ४४,९८८ | २५.३ |
| १६ तथा सो भन्दा माथि | ५०,४५७ | ५७.० | ५२,३१४ | ५७.४ | १,०२,७७१ | ५७.७ |
| जम्मा | ८८,७०६ | १०० | ८९,५५९ | ९१ | १,७८,२६५ | १०० |

यसप्रकार गोरखाको जनसंख्यालाई विभिन्न उमेर समूहमा बाँडेर ६० वर्षभन्दा माथि र नौ वर्षभन्दा मुनिको उमेर भएका बृद्ध एवं केटाकेटीलाई आर्थिक दृष्टिकोणबाट आश्रित अर्थात् जीविकाको निम्ति अरूमा भरपर्नु पर्ने जनसंख्या मान्ने हो भने तिनीहरूको संख्या ६१,४४५ (३४.५ प्रतिशत) हुन आउँछ। अर्कोतर्फ १० देखि माथि ५९ वर्षसम्म उमेर भएको जनसंख्यालाई आर्थिक दृष्टिबाट सक्षम अर्थात् काम गरी कमाउन सक्ने जनश्रम मानेमा तिनीहरूको संख्या १,१६,८२० (६५.५ प्रतिशत) हुन्छ । यसबाट के देखिन्छ भने यो जिल्लाको कुल १,७८,२६५ जनसंख्या मध्ये ६५.५ प्रतिशत मात्र सक्षम रहेछन् । अतः आर्थिक दृष्टिबाट सक्षम अर्थात् काम गर्न सक्ने उमेर भएको व्यक्ति माथि सरदर १.५ आश्रित व्यक्तिको आर्थिक भार परेको पाइन्छ । अर्को शब्दमा भन्ने हो भने १०० जना सक्षम मानिसले १५० जनालाई पाल्नु पर्दछ । यस हिसाबबाट हेर्दा गोरखा जिल्लामा आर्थिक निर्भरताको अनुपात १००:५० हुन आउँछ ।

गोरखा जिल्लाका मानिसहरू सानै उमेरदेखि प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा आर्थिक उपार्जन कार्यमा लाग्ने र साठी वर्ष पुग्दा बृद्धावस्था भइसक्ने अनुमान गरी माथि १०वर्षदेखि ५९ वर्षको उमेर समूहलाई आर्थिक दृष्टिबाट सक्षम जनश्रम मानिएको हो। यसलाई अन्तर्राष्ट्रिय चलन चल्ती अनुसार हेर्ने हो भने उपर्युक्त हिसाबमा केही भिन्नता हुन आउँछ । अन्तर्राष्ट्रिय नियम अनुसार १५ देखि ६४ वर्षसम्मको उमेर समूहलाई सक्षम र बाँकी जनश्रमलाई आश्रित जनसंख्या भनिन्छ । यस प्रकारको उमेर समूह विभाजन गरी हेर्दा गोरखा जिल्लाको सक्षम जनसंख्या १,००,३४५ अर्थात् ५६.३ प्रतिशत हुन्छ । आश्रित जनसंख्या ७७,९२० अर्थात् ४३.७ प्रतिशत छ । यसबाट के देखिन आउँछ भने प्रत्येक सक्षम व्यक्तिमाथि सरदर १.७ व्यक्ति आश्रित छन् । अर्थात् १०० जना सक्षम मानिसले आफू बाहेक अरू ७० जनाको पनि आर्थिक गुजारा चलाउनु पर्छ । यसरी अन्तर्राष्ट्रिय चलन चल्तीको आधारमा हिसाब गर्दा गोरखाको आर्थिक निर्भरताको अनुपात १००:७० हुन आउँछ ।

यो जिल्लाको वैवाहिक स्थितिलाई हेर्दा ३९,३८७ पुरुष र ४३,८२८ महिला विवाहित छन् भने ३२,२३५ पुरुष एवं २३,७३७ महिलाहरू आजीवन अविवाहित नै बसेको देखिन्छ । तर तथ्याङ्क विभागबाट २०२८ सालमा लिइएको तथ्याङ्कमा छ वर्ष भन्दा माथिको उमेर समूहमा पर्ने सबैलाई एकमुष्ट हिसाब गरिएको हुँदा अविवाहितहरूको संख्या ज्यादा देखिएको छ । छ वर्षदेखि १४ वर्षसम्मका केटीहरूको संख्या १९,३९६ छ भने छ वर्षदेखि १९ वर्षभित्रको उमेर समूहमा पर्ने केटाहरूको संख्या ३०,३६० छ । यी केटा - केटीहरूले उमेर पुगेपछि विवाह गर्ने भएकाले उपर्युक्त आजीवन अविवाहितहरूको वास्तविक संख्या निकै कम हुन जाने देखिन्छ । १५ वर्षदेखि २९ वर्ष उमेर समूहमा पर्ने केटा-केटीहरू ज्यादा संख्यामा विवाहित भएको देखिन्छ र यो उमेर समूहमा केटाहरूभन्दा केटीहरू नै बढ्ता विवाहित छन् । यहाँ २,२१३ जना विधुर र ६,११५ जना विधवाहरू छन् ।

नेपाल अधिराज्यका अन्य जिल्लाहरूमा जस्तै यो गोरखामा पनि विभिन्न जातजातिले बसोबास गरेका छन् । यी बासिन्दाहरू राष्ट्रभाषा नेपालीको अतिरिक्त आ-आफ्नो घर परिवारमा आ-आफ्ना जातीय भाषाका माध्यमद्वारा आफ्ना दुःख सुख र अनुभूतिहरू आदान प्रदान गर्दछन् । २०२८ को जनगणना अनुसार भाषाभाषीको आधारमा यो जिल्लाको जनसंख्या विभाजन यस प्रकार गरिएको छ—

| बोलिने भाषाभाषी | बोल्नेको संख्या |
|---|---|
| नेपाली भाषा | १,४४,४७३ |
| तामाङ भाषा | २,६५३ |
| नेवारी भाषा | १,७०२ |
| मगर भाषा | ३,९६६ |
| गुरुङ भाषा | २०,७८१ |
| शेर्पा भाषा | २,१३३ |
| अन्य भाषा | २,५५७ |
| जम्माः– | १,७८,२६५ |

माथि उल्लिखित अन्य भाषा बोल्नेहरूको समूहमा मैथिली, लिम्बू, राजवंशी, दराई आदि भाषाभाषीहरू समावेश गरिएका छन्। यी भाषा बोल्ने जातिहरू जिल्लाको यत्र तत्र छरिएर बसेका छन् र यिनीहरूको संख्या ज्यादै थोरै छ । गुरुङ तथा मगर भाषा बोल्नेहरू यहाँका विभिन्न लेकाली गाउँमा संगठित रूपले बसेका पाइन्छन् । शेर्पा भाषा बोल्नेहरू ज्यादा त लार्के भोट तथा जिल्लाको उत्तरी क्षेत्रमा बसोबास गरेका हुन्छन् । नेवारी भाषा बोल्नेहरू आरुघाट, पोखरीथोक, खानचोक, खोपलाङ आदि स्थानका स-साना बजारहरूमा ज्यादा बसेका छन् ।

गोरखा जिल्लामा जम्मा ६२ वटा गाउँ पञ्चायतहरू छन् । यी पञ्चायतमा बस्नेहरूको संख्या निम्नानुसार छः–

| पञ्चायत | जनसंख्या | पञ्चायत | जनसंख्या |
|---|---|---|---|
| १. अजिरकोट | २,०५४ | २. आँपपीपल | ३,६०१ |
| ३. आरू खारवाङ | ३,३४७ | ४. आरू चनौटे | २,२५१ |
| ५. आरू पोखरी | ३,६३० | ६. असंराङ | २,४४२ |
| ७. उहिया | १,५२२ | ८. कालिका चौराली | २,६३७ |
| ९. खरीबोट | २,७७५ | १०. खोपलाङ | ३,६९९ |
| ११. गाईखुर | ३,३३० | १२. गाखु | १,८४६ |
| १३. गोहारे | २,४७८ | १४. गुम्दा | १,६१६ |
| १५. गोरखकाली | ४,८३२ | १६. घैरूङ | ३,५०९ |
| १७. घ्यालचोक | ३,०४४ | १८. च्याङली | ३,२५२ |
| १९. छेपे तारानगर | २,६८९ | २०. छोप्राक | ४,४३१ |
| २१. जौबारी | २,९५४ | २२. ताङलीचोक | २,८६६ |
| २३. ताकलुङ | ४,०५४ | २४. ताकुलांकुरी | २,०१० |
| २५. ताकुकोट | ३,०२८ | २६. तान्द्राङ | ३,६८१ |
| २७. तापले बगुवा | २,०९७ | २८. तापले कोखे | ३,२०० |

| | | | |
|---|---|---|---|
| २९. बरभुङ | ३,२२१ | ३०. धूवाँकोट | २,०७३ |
| ३१. धावा | २,४२६ | ३२. नारेश्वर भोगटेनी | ३,०७७ |
| ३३. नामजुङ | २,८०४ | ३४. पन्द्रुङ | २,२३१ |
| ३५. पालुङटार | ४,६२४ | ३६. प्रोक | ८१९ |
| ३७. फिनाम | २,३१६ | ३८. फुजेल | ३,५८६ |
| ३९. बक्राङ | ३,२२७ | ४०. बारपाककोट | १,८९० |
| ४१. बारपाक पनेरा | १,७७३ | ४२. बोरलाङ | ३,२५५ |
| ४३. बुङकोट | ५,००६ | ४४. भीरकोट | ३,१२८ |
| ४५. भुमलीचोक | २,३५१ | ४६. मकैसिङ | १,७३३ |
| ४७. मनकामना | ३,८२२ | ४८. मीरकोट | ३,१२८ |
| ४९. मुचोक | २,८१२ | ५०. मसेल | ३,०६३ |
| ५१. रानी स्वाँरा | ४,१२१ | ५२. लापु | १,२२५ |
| ५३. ह्लो | १,३३९ | ५४. लापराक लाप्राक | १,८७८ |
| ५५. सिरानचोक थालाजुङ | २,६६३ | ५६. सिरानचोक केराबारी | १,७३० |
| ५७. सिमजुङ | ४,१२८ | ५८. स्वाँरा | २,६६४ |
| ५९. सिर्दिवास | ८१६ | ६०. सातवीस थुमी | २,८६२ |
| ६१. सौरपानी | ४,७६१ | ६२. हर्मी | ३,६७७ |
| ६३. हंसपुर | २,०५२ | | |

माथिको तालिकाबाट देखिएअनुसार सबैभन्दा बढी अर्थात् ५,००६ जनसंख्या हुने पञ्चायत बुङकोट हो र सबैभन्दा थोरै अर्थात् ८१६ तथा ८१९ जनसंख्या हुने पञ्चायत क्रमशः सिर्दिवास र प्रोक हुन् । यी दुवै पञ्चायत जिल्लाको उत्तरी भागमा दुर्गम क्षेत्रभित्र पर्दछन् । यहाँका अधिकांश पञ्चायतहरू २,००० देखि ३,९९९ को जनसंख्या समूहभित्र पर्दछन् ।

## जनजीवन

पृथ्वीनारायण शाहको चार वर्ण छत्तीस जातको फूलबारी यो गोरखामा क्षेत्री, बाहुन, गुरूङ, मगर, नेवार, शेर्पा, तामाङ, चेपाङ, कामी, दमाई तथा सार्की एवं गाइने आदि विभिन्न जातिहरू बसोबास गर्दछन् । क्षेत्री, बाहुन तथा नेवार जातिमा जस्तै अन्य जातिमा पनि विभिन्न थर र उपथरहरू छन् । बाहुनहरूमा खास गरेर अर्जेल, खनाल, देवकोटा, धिताल, न्यौपाने, पाण्डे, पन्त, बिष्ट एवं तिवारीहरू छन् । त्यस्तै क्षेत्रीहरूमा थापा, खड्का, कार्की, महत आदि करीब २५ थरीका छन् । यिनमा प्रशस्त उपथरहरू हुन्छन् । जस्तो– बगाले थापा, सुंएल थापा, पराजुली थापा इत्यादि । गुरुङहरू घले, घोताने, लामा, लामिछाने जस्ता मुख्य चार समूहमा विभाजित छन् । यिनै मुख्य चार समूहबाट अरू विभिन्न थर र उपथरहरू बनेका छन् । माथि उल्लिखित अन्य जातिका पनि फरक फरक थर तथा उपथरहरू हुन्छन् । एउटै थर भएका जातिमा पनि उपथर फरक छ भने बिहाबारी चल्छ । जस्तो पराजुली थापाले सुंएल थापाको चेलीबेटी विवाह गर्न सक्छ । यी सबै

जातिको रहनसहन ज्यादात हिन्दू संस्कृतिबाट प्रभावित भएकोले धेरै मिल्दो जुल्दो हुन्छ । तर जिल्लाको उत्तरी भागतिर बस्ने शेर्पा अर्थात हिमालीहरूको संस्कृति भने दक्षिणपट्टिको रीतिस्थितिबाट त्यति प्रभावित भएको पाइँदैन । बाहुन, क्षेत्री तथा ठकुरीहरूको जीवन चक्रमा न्वारान, अन्न प्राशन, उपनयन, समावर्तन, विवाह, मृत-लाश जलाउने अन्त्येष्टि काजक्रिया गर्ने र मृत्यु पछि श्राद्ध आदि गर्ने चलन छ । गुरुङ तथा शेर्पा जातिको जीवन चक्रमा भने न्वारान, विवाह र मृतलाश गाड्ने जस्तो सामान्य कर्महरू मात्र हुन्छन् ।

यो जिल्लामा नेपाली मातृ भाषा बोल्नेहरूको संख्या ज्यादा भएको कुरा माथि उल्लिखित भाषा भाषीको तालिकाबाट प्रष्ट हुन्छ । भाषाभाषीकै आधारमा विश्लेषण गर्दा यहाँको दोस्रो बहुसंख्यक जाति गुरुङ भाषा बोल्ने गुरुङहरूलाई मान्नु पर्दछ । २०२८ सालमा लिइएको तथ्याङ्कबाट गुरुङ भाषा बोल्नेहरूको संख्या २०,७८१ देखिन्छ। तर जिल्लाको दक्षिण भागतिर छरिएर बसेका केही गुरुङहरूले नेपाली भाषालाई नै मातृ भाषाको रूपमा प्रयोग गर्न थालेका हुँदा भाषाको आधारमा मात्र गुरुङको संख्या किटान गर्न सकिँदैन । अतः गोरखा जिल्लामा गुरुङको संख्या २०,७८१ भन्दा केही बढी नै होला । धौलागिरिदेखि मनासुलुसम्म हिमाली शृङ्खलाको दक्षिणी पाखो पखेरोलाई आफ्नो मुख्य थलो बनाएर बसोबास गर्दै आएका गुरुङहरूको विस्तृत विवरण लमजुङ जिल्ला परिचयमा दिइएको छ तापनि गोरखाको दोस्रो बहुसंख्यक जन शक्ति गुरुङ जातिको सम्बन्धमा यहाँ पनि केही उल्लेख गरिएको छ ।

गोरखाली गुरुङ

गोरखाली गुरुङहरूको शारीरिक गठन, रूप रङ्ग तथा कद र पहिरन थकाली र मगरसित मिल्न खोज्छ । तर भाषा भने तिब्बती बर्मेली परिवारको भए तापनि मगर, थकाली तथा राई, लिम्बूकोभन्दा फरक छ । धार्मिक परम्परा तथा कतिपय साँस्कृतिक परिपाटीहरू गोरखा जिल्लाको उत्तरी भेकको लार्के भोट क्षेत्रमा बस्ने शेर्पाहरूसँग मिल्न खोज्छ । तर जिल्लाको दक्षिणी भागतिर असंगठित रूपले बसोबास गर्ने गुरुङहरूको रहन सहन भने क्षेत्री बाहुनको सामाजिक परम्पराबाट प्रभावित भएको छ । जिल्लाको मध्यभाग अर्थात लाप्राक बारपाक, उहियाक, सिर्दिबास, गुम्दा, सिमजुङ, खरीबोट आदि ठाउँमा बस्नेहरू कसैको रीतिस्थितिबाट कमै प्रभावित भएको पाइन्छ । यिनीहरू आफ्नै झाँक्री धर्मअनुसार सामाजिक चाहाड पर्व र जीवनका अत्यधिक कर्म काण्डहरू मनाउँछन् ।

यहाँका गुरुङहरू आफ्नो समुदायमा आफ्नै भाषा बोल्छन् । आफ्नै भाषामा आ–आफ्ना दुःख–सुख र प्रेमका अनुभूतिहरू आदान-प्रदान गर्छन् । आफ्नो लयमा गाउँछन् र आफ्नै तालमा नाच्छन्। तर यहाँका गुरुङ-हरू सबै राष्ट्र भाषा नेपाली राम्रोसँग बोल्न सक्छन्। सार्वजनिक चाहाड पर्व र मेलामा आसपासका अन्य जाति-हरू सँगसँगै नेपाली भाषा बोल्ने, यसैमा गाउने र यसैको अनुभूतिमा रमाउने गर्दछन् । आफ्नो उत्तरी भेकको पुरानो थलो छोडेर दक्षिणी पाखोतिर बसाइँ सरेका गुरुङहरू त आफ्नो समुदायमा पनि नेपाली भाषा नै बोल्छन् ।

गोरखा राज्यका संस्थापक द्रव्य शाह गोरखामा प्रवेश गर्नुभन्दा पहिले यो जिल्लाको लिग लिग कोटमा घले राजाहरू थिए भन्ने कुरा इतिहासकारहरूले प्रमाणित गरेका छन् । यसबाट के प्रष्ट भएको छ भने चार-पाँच सय वर्ष पहिलेदेखि नै गुरुङहरूले गोरखामा महत्वपूर्ण स्थान ओगटेका छन्। विशाल नेपालको सिर्जना गर्ने सिलसिलामा यहाँका गुरुङहरूले पृथ्वीनारायण शाहलाई प्रशस्त मद्दत पुर्‍याएका थिए । यहाँका सिधासादा

बहादुर गुरुङहरूले स्वदेशी र विदेशी सैनिक सेवामा निकै नाम कमाएका छन्। दोस्रो महायुद्धमा भी.सी. पाउने वीर गजेघले गोरखाली गुरुङ थिए। वीर चक्र तथा अन्य विभूषणद्वारा सुशोभित भएका गुरुङ त गोरखामा कति छन् कति। अहिले पनि नेपाली, भारतीय र बृटिश सेनामा यहाँका गुरुङहरूले निकै नाम र विश्वास कमाएका छन्। वास्तवमा गोरखाली गुरुङको मुख्य कमाइ सैनिक सेवाबाट हुने आम्दानी नै हो। सैनिक सेवा त गोरखाली गुरुङको जनजीवनको अभिन्न अङ्ग भइसकेको छ।

सैनिक सेवामा नलागेका र भूतपूर्व सैनिकहरूले कृषि व्यवसायलाई आफ्नो मुख्य पेशा बनाएका हुन्छन्। यिनीहरूको खेती धान, मकै, कोदो र आलु नै मुख्य हुन्। यो जिल्लाको लेकाली बस्तीमा बस्ने गुरुङहरू निकै भेडा पनि पाल्ने गर्दछन्। मल र मासुको लागिभन्दा पनि ऊनको लागि भेडा पालिएको हुन्छ। भेडाबाट प्राप्त हुने ऊन प्रयोग गरी यहाँका गुरुङसेनीहरू राम्रो राम्रो राडी, पाखी र बख्खु आदि बुन्दछन्। आफ्नो घरायसी आवश्यकता पूरा गरी बचेको राडी,पाखी बिक्री गरेर आएको आमदानीले दैनिक उपभोगका अरू सामान खरीद गर्दछन्। प्रायः प्रत्येक घर परिवारमा केही भेडा पालिएको हुन्छ। हरेक घरका भेडा एकैसाथ गरी दुई-तीन सयको बथान बनाएर वन पाखोमा चरनको लागि लगिन्छ। भेडा बथानको रेख देख गर्ने गोठालो केटा केटी जान्छन्। यस कार्यमा यी केटाकेटीलाई सघाउन भोटे कुकुरहरू पनि पालिएका हुन्छन्। यी कुकुरहरूले भेडालाई स्याल, ब्वाँसो, चितुवा आदि वन्य जनावरबाट बचाउँदछन्। जाडोताका बेंसीमा र गर्मीताका लेकतिर खर्क कायम गरी भेडालाई चरनको व्यवस्था गरिन्छ। वर्षको दुईपल्ट अक्सर वैशाख र असोजमा भेडाको भुत्ला काट्ने काम हुन्छ। यो जिल्लाका गुरुङहरू गोरस र मलको निमित्त गाई र भैंसी पनि पाल्ने काम गर्दछन्। निकै खेत बारी हुनेहरूले जोत खनको निम्ति गोरु पनि पालेका हुन्छन्।

यहाँका गुरुङ र गुरुङसेनीहरूको भेषभूषा अन्य जातिकोभन्दा केही फरक हुन्छ। पुरुषहरू ज्यादा जसो भोटो र कछाड लगाउन मन पराउँछन्। भोटोमाथि कोट वा इष्टकोट लगाएका हुन्छन्। उमेर केही ढल्केकाहरू कम्बरमा सानो पटुका बान्दछन्। तर तन्नेरी केटाहरूले भने अक्सर रातो रुमाल बाँधेका हुन्छन्। इष्टकोटको टाँक लगाउने घरमा चाँदीको सिक्री झुण्डयाएको पनि पाइन्छ। राम्रोसित कोरेको कपालमाथि ढाका वा कालो भादगाउँले वा टोप्रेलको टोली ढल्काएर लगाएका हुन्छन्। सैनिक सेवामा लागेका केटाहरूको भेषभूषामा केही विदेशी प्रभाव परेको पाइन्छ। गुरुङ जातिका महिलाहरू चोलो र फरिया लगाउँछन्। कम्बरमा पटुका बाँध्छन्। सबैजसो गुरुङसेनीहरू घलेक पार्न मनपराउँछन्। गलामा पोते, माला र नौगेडी तथा हातमा काँड वाला र चुरा आदि लगाउँछन्। नाकमा झुम्के बुलाकी र फुली, कानमा ढुंग्री, मुन्द्री र चारपाटे आदि गहनाले सिंगार्छन्।

लमजुङ, मनाङ र कास्की जिल्लामा जस्तै गोरखामा पनि चार जाते तथा सोह्र जाते गुरुङहरू बसेका छन्। चार जातेलाई घले, घोताने, लामा र लामिछाने भन्दछन्। सोह्र जातेमा रिमाली, दार्जाली, ध्याब्रे, थोजे आदि थर तथा उपथरहरू हुन्छन्। लामा बाहेक अरू गुरुङ जातिका मानिसहरू ध्याब्रेलाई आफ्नो पुरोहित मान्दछन्। लामाको पुरोहित लामा नै हुन्छ। क्षेत्री बाहुनको समाजमा जस्तो गुरुङ समाजमा पुरोहित काम ज्यादा पर्दैन। मानिस जन्मेको बेलामा र मृत्यु संस्कार गर्दा पुरोहितको आवश्यकता पर्दछ। प्रायः प्रत्येक गाउँमा केही मूल घरहरू हुन्छन्। यो घरलाई गुरुङ भाषामा "चिवा" भनिन्छ। मुख्य मुख्य चाहाड पर्वमा गुरुङहरू यो चिवामा भेला भएर पूजा आजा तथा टीका टालो गर्दछन्,

भोज खान्छन् र रमाइलो गर्छन् । गुरुङहरूको यो "चिवा" नेवारहरूको गुठी जस्तो देखिन्छ । चिवामा भेला भएर भोज खानको निमित्त सबै मिलेर केही खेतबारी राखिएको हुन्छ । यस्तो खेतबारीलाई "कामरुडा" भन्ने चलन छ ।

यो जातिमा बिहाबारी गर्दा मामा चेला फुपू चेली अथवा मामा चेली फुपू चेला गर्ने प्रथा छ । तर यहाँका गुरुङहरू यो प्रथाप्रति त्यति कट्टर छैनन् । घाँस-दाउरा, मेलापात र रोदी घरमा नाचगान गर्दा माया प्रिति गाँसेर पनि केटाकेटीहरूले बिहे गरेको पाइन्छ । बिहे गर्दा केही गुरुङहरू बाजा बजाए र जन्ती सहित दुलहीको घरमा जान्छन् । तर धेरै जसो गोरखाली गुरुङहरू केही साथी भाइ र छर छिमेकी मात्र गएर दुलही ल्याउने गर्दछन् । बिहे गरेको केही दिन भित्रै दुलही माइती घरमा गई बस्ने चलन छ । छोराछोरी भएपछि मात्र केटीहरू स्थायी रूपले केटोको घरमा बस्न थाल्छन् । यसरी केटीले केटाको घरमा बस्न थालेपछि मात्र बाबु आमाले छोरीलाई आफू सक्दो उपहार दिन्छन् । छोरा छोरी जन्मेपछि ठूलो उत्सव गरी नाचगान र रमाइलो मनाउने गुरुङहरूको चलन छ ।

यहाँको गुरुङ समाजमा मृत लाश गाड्ने चलन छ । तर मर्दाखेरीको ग्रह नक्षत्र हेरी कुनै बेला जलाउने पनि चलन छ । मृत लाशलाई गाड्न वा जलाउन गुरुङहरूले आ-आफ्नो गाउँको आसपासमा एउटा सामूहिक ठाउँ बनाइ राखेका हुन्छन् । यो ठाउँ अक्सर अलिकति अग्लो डाँडामा हुन्छ । यस्तो ठाउँलाई "चिहान डाँडा" भन्ने पनि चलन छ । मृत व्यक्तिका छोराले छ महीना वा एक वर्ष र जुठो लाग्ने दाजु भाइले १३ दिनसम्म जुठो वा बरखी बार्ने गर्दछन् । वर्ष दिन पुगेपछि "पाए" भन्ने कर्म गरिन्छ । यो कर्म गर्दा ध्याब्रेले मृत व्यक्तिको पुत्ला बनाएर आँगनमा राखी भेडाको पाठो सहित पूजा गर्दछन् । पूजा सकेपछि दोबाटोमा लगी पाठो काटेर प्रेत मनाउने कर्म हुन्छ । यो कर्म सकेपछि प्रेतात्मा स्वर्ग जान्छ र पितृ हुन्छ भन्ने गुरुङहरूको विश्वास छ । यसपछि मृत व्यक्तिको नाममा सबै मिलेर चौतारो अर्थात् पोखरी बनाउने पनि चलन छ ।

गोरखाली गुरुङहरूको आफ्नो संस्कृतिहरूमध्ये रोदी घर पनि एक हो । प्रायः प्रत्येक गाउँमा एउटा रोदी घर हुन्छ । उमेर पुगेका केटाकेटीहरू बेलुका यो घरमा भेला भएर नाच गान र ठट्टा रमाइलो गर्दछन् । कुनै कुनै रोदी घरमा नेवा आवा र नेवा आमा हुन्छन् । यिनीहरूले केटाकेटीलाई नाच्न गाउन सिकाउने र नेतृत्व दिने काम गर्दछन् । यो रोदी घर कुनै पनि आधुनिक क्लबभन्दा कम रमाइलो हुँदैन । यो रमाइलोले गाउँलेको दिनभरिको थकाइ पनि बिर्साइदिन्छ । आपसी मेलमिलाप बढाउन र हाँसी खुशीले जीवन निर्वाह गर्न रोदी घरको भूमिका महत्वपूर्ण छ । गोरखाली गुरुङहरूको जन जीवनमा रोदी घर एउटा अभिन्न अङ्ग भएको छ ।

# आर्थिक व्यवस्था

चेपे, दरौंदी, मर्स्याङदी र त्रिशूलीको वरपर केही समथर भू-भाग भए तापनि गोरखा जिल्लाको अधिकांश भूमि पर्वत, पाखा र पैरोले बनेको छ। यी सबै डाँडा, भीर तथा हिमाली भू-भागमध्ये करीब ११,००० हेक्टर मात्र आवादी भएको छ। खेती-योग्य जमीन यस्तो कम भएको गोरखा जिल्लामा पनि अत्यधिक जनसंख्या कृषिमा आधारित छ। यसबाट गोरखाबासीहरूको आर्थिक स्थिति नाजुक रहेछ भन्ने सङ्केत हुन्छ।

## कृषि

कृषि तथ्याङ्क २०२८ अनुसार यो जिल्लामा सालाखाला खाद्यान्न उत्पादन वार्षिक २८,०००मेट्रिक टन हुन्छ। यो कुल उत्पादनमध्येबाट बीज बीजनको लागि र विभिन्न कारणबाट क्षति हुन सक्ने वार्षिक ३,००० मेट्रिक टन घटाउँदा २५,००० मेट्रिक टन मात्र बाँकी रहन्छ। यसमा पनि कुटफलगरी भूस तथा धूलो आदि अलग गरेपछि खान-योग्य खाद्यान्न २०,००० मेट्रिक टन मात्र बाँकी हुन आउँछ। गोरखा जिल्लाको १,७८,२६५ जनसंख्याको निम्ति प्रतिव्यक्ति वार्षिक अन्दाजी १६० किलोग्रामका दरले खाद्यान्न हिसाब गर्दा २८,५२२ मेट्रिक टन आवश्यक पर्न आउँछ। जिल्लामा उत्पादित खान-योग्य खाद्यान्न २०,००० मेट्रिक टन मात्र भएकोले बाँकी ८,५२२ मेट्रिक टन अनाज अन्यत्रबाट आयात गर्नु पर्ने कुरा प्रष्ट हुन आउँछ। यहाँ आलु तथा अन्य नगदे बाली समावेश गरिएको छैन। नगदेबाली र आलु खेती नगण्य भए तापनि खाद्यान्न न्यून हुँदा यसबाट केही अंशमा मद्दत हुने हुँदा आयात गर्नु पर्ने उपर्युक्त तथ्याङ्क अलिकति घट्न जाने देखिन्छ। अतः गोरखा जिल्ला खाद्यान्न न्यून भएका पहाडी जिल्लाहरूको समूहमा पर्न आउँछ।

नेपाल अधिराज्यका अन्य पहाडी जिल्लाहरूमा जस्तै गोरखाको आर्थिक गतिविधि पनि ज्यादा त कृषिमा नै केन्द्रित हुँदै आएको छ। यो जिल्लामा हुने मुख्य खाद्यान्न धान, मकै, गहुँ, कोदो, जौ आदि हुन्। दलहन-मा तोरी, तील तथा नगदे बालीमा उखु र सुर्ती हुन्छन्। गण्डकी अञ्चलका अन्य जिल्लाहरूको तुलनामा गोरखा जिल्लामा आलु खेती निकै गरिन्छ। आर्थिक वर्ष २०२४।२५ देखि यताको कृषि तथ्याङ्क हेर्दा यहाँ धानभन्दा मकै बालीले बढी क्षेत्र ओगटेको पाइन्छ। त्यस्तै उत्पादनमा पनि मकै ज्यादा भएको देखिन्छ। गोरखा जस्तो समथर फाँट र खेत कम भएको तथा सिचाइको व्यवस्था नभएको जिल्लामा खेतबाली अर्थात् धानभन्दा पाखा बाली अर्थात् मकै, कोदो ज्यादा हुनु स्वाभाविक कुरा हो। समथर भू-भागबाट औलो उन्मूलन भएको हुँदा डाँडाको भेकमा बस्ने मानिसहरूमा बेंसीतिर झर्ने प्रवृत्ति बढ्न थालेको छ।

यसैले गर्दा बेंसीको समथर भागमा धान खेतीको वृद्धि हुन थालेको देखिन्छ । तर समथर भागमा धेरैजसो सुख्खाटारहरू भएकोले धान खेतीको प्रगति राम्रो हुन सकेको छैन । यहाँको धान खेतीको वृद्धि गरी खाद्यान्नको न्यूनता पूर्ति गर्न टारहरू सिचाई गर्ने तर्फ विषेश जोड दिनु पर्ने देखिन्छ ।

यो जिल्लाका विभिन्न खेती-बालीले ढाकेको जमीन र ती बालीहरूको उत्पादन क्षमता फरक फरक छ । कृषि तथ्याङ्क २०२८ अनुसार यहाँका मुख्य बालीले ओगटेको जमीन र उत्पादन प्रक्रिया यसप्रकार छन् :–

क्षेत्रफल र उत्पादनको तालिका

क्षेत्र– हेक्टरमा

उत्पादन– मेट्रिक टनमा

| वर्ष | धान | | मकै | | गहुँ | | कोदो | |
|---|---|---|---|---|---|---|---|---|
| | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन |
| २०२४।२५ | ४,१०० | ९,६३५ | ७,५०० | ११,४०० | ६२५ | ७५० | २,८०० | ३,३२६ |
| २०२५।२६ | ४,२०० | ९,६६० | ६,००० | ११,८८० | ६२५ | ७५० | २,९०० | ३,४२२ |
| २०२६।२७ | ४,२०० | ९,८२८ | ६,१०० | १२,२०० | ६५० | ८१२ | २,९५० | २,५१० |
| २०२७।२८ | ४,३०० | १०,३२० | ६,४०० | १३,०५६ | ६५० | ६३० | ३,००० | ३,६०० |
| २०२८।२९ | ४,४०० | १०,३४० | ६,३०० | ८,९२१ | ६५० | ६४३ | – | – |
| २०२९।३० | ४,४०० | १०,५६० | ६,४०० | १६,१९५ | ६५० | ७६१ | ३,१०० | २,७२० |

| वर्ष | जौ | | आलु | | तेलहन | | उखु | | सुर्ती | |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन | क्षेत्र | उत्पादन |
| २०२४।२५ | २४० | २१२ | ९०० | ४,५०० | १७५ | ८३ | ७० | १,०९२ | ३ | २ |
| २०२५।२६ | २५० | २२१ | ९२० | ४,६०० | १७५ | ८७ | ७० | १,०९२ | ३ | २ |
| २०२६।२७ | २५० | २२५ | ९५० | ४,७५० | २०० | १०४ | ७५ | १,२०० | ३ | २ |
| २०२७।२८ | २६० | २३४ | १,००० | ५,००० | २०० | १०५ | ८० | १,२८० | ५ | ३ |
| २०२८।२९ | – | – | – | – | – | – | – | – | – | – |
| २०२९।३० | २७५ | २४७ | १,०२० | ४,९४७ | २०० | १०० | ८० | १,२८० | ५ | ३ |

उपर्युक्त तालिकाहरूअनुसार आर्थिक वर्ष २०२४।२५ देखि यस जिल्लाको खाद्यान्न तथा नगदे बाली उत्पादन र यी खेतीहरूले ढाकेको क्षेत्रफल पनि क्रमशः वृद्धि हुँदै आएको देखिन्छ । २०२७।०२८ को गहुँ बाली केही कम भएको र सुर्ती खेती प्रायः यथावत स्थितिमा रहेको पाइन्छ । यसबाट के कुराको सङ्केत हुन्छ भने गहुँ खेती गर्नेतर्फ जिल्ला बासीहरू त्यति अग्रसर नभएका र सुर्ती खेतीको हकमा पहाडतर्फ यसलाई नगदे बालीको रूपमा नलिएर स्थानीय आवश्यकताको लागि मात्र प्रायः प्रत्येक परिवारले थोर बहुत खेती गर्नेतर्फ मात्र मानिस-हरूको परम्परा रहेको महसूस हुन्छ । आलु खेतीतर्फ भने मानिसहरूले निकै चाख राख्न थालेको देखिन्छ । खासगरेर जिल्लाको उत्तरी भागमा पर्ने भोट र लेकाली क्षेत्रमा मानिसहरू वर्ष आलु खेती धेरै गर्ने हुँदा यहाँको आलु खेतीको आँकडा राम्रो देखिएको हुन सक्छ । धान, मकै, कोदो आदि मुख्य बालीहरू उत्पादनको

साथसाथै यी बालीले ढाकेको जमीन पनि बढ्दै गएकोबाट के कुरा पनि प्रष्ट हुन्छ भने सघन कृषि कार्यक्रमको फलस्वरूप मात्र यहाँको उत्पादन बढेको होइन क्षेत्रफल विस्तार हुन गएबाट पनि वृद्धि भएको हो। यो जिल्लाको मुख्य नगदेबाली उखु लगाएको क्षेत्रफल र यसको उत्पादन वृद्धिको प्रक्रियामा खास घटबढ भएको पाइँदैन। गोरखा जिल्लामा उखु खेती गर्नेहरू तराईतिर जस्तो नगद आर्जनको उद्देश्यले गर्दैनन्। घरायसी कार्यमा आवश्यक गुलियो टार्नकोलागि खुँदो र सक्खर बनाउने उद्देश्यबाट प्रायः प्रत्येक परिवारले आ-आफ्नो गाउँ बसीमा एक-दुई हलको मेलो उखु लगाएका हुन्छन्। घरायसी प्रयोगभन्दा बढी भएको सखर तथा खुँदो स्थानीय बजारमा खरीद बिक्री गरिन्छ। जिल्लाको उत्तरी भाग र लेकाली बस्तीहरूमा उखु खेती हुँदैन। दरौंदीको तीरमा अवस्थित जरेबरको फाँटमा निकै राम्रो उखु खेती हुन्छ। यसको अतिरिक्त यहाँ नगदे बालीको रूपमा कपास, तोरी, अदुवा तथा हलेदो खेती पनि लगाएको पाइन्छ। तर ती खेतीहरू पनि स्थानीय प्रयोगमा नै सीमित छन्।

गोरखा जिल्लाको ज्यादाजसो आर्थिक गतिविधि कृषिमा केन्द्रित छ भन्ने कुरा माथि पनि उल्लेख भइसकेको छ। साधारण उद्योग व्यवसायमा लाग्नेहरू पनि जिल्लामा छन्। तर कृषि पेशामा लाग्नेहरूको तुलनामा अन्य पेशेवारको संख्या नगण्य छ। जिल्लाका क्षेत्री, बाहुन, गुरुङ, मगर आदि प्रायः सबै जाति कृषि व्यवसायमा लागेका पाइन्छन्। नेवार जातिका मानिसहरू अक्सर व्यापारमा लागेका हुन्छन् र गुरुङ, मगरहरू भेडा पालन गरी ऊनबाट राडी, पाखी र बख्खु बुन्ने जस्ता घरेलु उद्योग व्यवसायमा लागेका हुन्छन्। तर यस्ता कामहरू ज्यादातः कृषि व्यवसायबाट बचेको फुर्सदको समयमा गरिन्छ। कच्चा पदार्थको कमी र उत्पादित वस्तुको लागि आवश्यक बजार व्यवस्था नभएबाट राडी, पाखी बुन्ने वारपाकका गुरुङहरूको शीप र श्रमले पूरा व्यवसायको रूप लिन सकेको छैन।

जिल्लाबासीहरू आफ्नो खेतीपाती गर्दा वरपर एकले अर्कोलाई आलोपालो गरी सघाउने चलन छ। यो चलनलाई भारोपर्म भनिन्छ। खासगरेर धान रोप्दा, घैया गोड्दा, कोदो रोप्दा र दाँइ गर्दा एकै पटकमा ज्यादा श्रमको आवश्यकता पर्ने हुँदा भारोपर्म गरी सबैले सबैको सामूहिक श्रमको आवश्यकता पूर्ति गरेका हुन्छन्। जिल्लाबासीहरूमा परम्परागत चलिआएको सहकारी भावना ज्यादै प्रशंसनीय मान्नु पर्छ। केही धनी परिवारले भने भारोपर्मको सट्टा ज्याला दिएर काम लगाउँछन्। यसरी ज्याला दिनुलाई जिल्लामा मजुरी दिने पनि भन्दछन्। ज्याला दिंदा पुरुषलाई प्रति दिन रू.चार र महिलालाई रू. पाँच मोहर दिनुपर्छ। काम लगाउनेले दिउँसो खाजा खुवाउने चलन छ। यसरी जग्गा धेरै हुने र जग्गा कम हुने वा जग्गा नहुने समेत प्रत्यक्ष वा अप्रत्यक्ष रूपबाट ज्यादात कृषि व्यवसायमा नै भर परेका हुन्छन्।

अनिश्चित वर्षा अर्थात् अतिवृष्टि र अनावृष्टिको कारणबाट यो जिल्लामा समय समयमा अनिकाल परेको देखिन्छ। खासगरेर वर्षे बाली खाइसकेको र हिउँदे बाली भित्री नसकेको बेला अर्थात् चैत, वैशाख र जेठताका यहाँ अन्नाभाव भएको पाइन्छ। हाल छिमेकी जिल्ला तनहूँबाट पृथ्वीराजमार्ग गइदिएकोले हेटौंडा तथा भैरहवातिरबाट आउने खाद्यान्नले यहाँको खाँचो टार्न सजिलो भएको छ। देश विदेशमा नोकरी गर्नेहरू तलबबाट बचेको रकमले बेसाहा खान्छन् भने नोकरी नहुनेहरू बाखो पाठो बेचेर तथा ज्यालादारी गरेर खाद्यान्न खरीद गर्छन्।

भूमि व्यवस्था

वि. सं. २०२८ को कृषि तथ्याङ्क अनुसार यो जिल्लामा करीब ११,००० हेक्टर जमीन आवादी भएको छ। यहाँको कुल क्षेत्रफलमध्ये करीब २,३९,५०० हेक्टर जमीन भीर,पर्वत तथा वन जङ्गलले ढाकेको छ र यो भागमा खेती-योग्य जमीन छैन। गोरखा जिल्लाबासीहरूलाई खेती गरिएको जमीन प्रतिव्यक्ति .०६ हेक्टर अर्थात् .२ रोपनी मात्र पर्न आउँछ। यो जिल्लाको कुल परिवार संख्या ३२,२४६ देखिन्छ। आवादी भएको जमीन र घर परिवार संख्या हेर्दा प्रतिपरिवार .३ हेक्टर अर्थात् छ रोपनी पर्न आउँछ।

यो जिल्लामा २०२२ सालमा भूमिसुधार लागू भएपछि ऋण निश्चित गर्ने, बचत संकलन गर्ने र मोहियानी हक प्रदान गर्ने जस्ता कार्यहरू हुन थाले। ऋण निश्चित गर्ने कार्यक्रम अनुसार हालसम्म जम्मा ११,३४,५१५। रकमको ऋण निश्चित गर्ने कार्यवाही भयो। यसमध्ये रू. ३,८७,५७७। मिन्हा गरियो। मिन्हा भएको रकममध्ये ८६,१३०। कृषि ऋण र ३,०१,४४७। अन्य ऋण देखिएको थियो। यो रकम मिन्हाको सिलसिलामा आसामीले करीब ८० हेक्टर अर्थात् १,५९५ रोपनी जमीन भोगबन्दकीबाट फिर्ता समेत पाएको देखिन्छ।

गोरखा जिल्लामा भूमिसुधार कार्यक्रम लागू भएपछि अहिलेसम्म जिन्सी तर्फ १२,५५१ मुरी अनाज र नगद तर्फ रू. ६४,३२८। बचत संकलन भएको छ। जिन्सी बचत केही बिक्री वितरण भई नगदमा परिणत भइसकेको छ। नगद बचतमध्ये रू. १,४०,४०६। कृषि विकास बैंकमा जम्मा भइसकेको छ। बाँकी रहेको जिन्सी तथा नगदी बचत ग्राम समिति मार्फत किसानहरूलाई कृषि औजार किन्ने, मालपोत तिर्ने, औषधि किन्ने, खाद्यान्न खरीद गर्ने, मलखाद तथा उन्नत जातको बीउ किन्ने कार्यको लागि ऋण वितरण गरिएको छ। मोहियानी हक कायम गराउने सम्बन्धमा परेको निवेदनहरूमध्ये १९९ लाई सो हक प्रदान गरिएको थियो। त्यस्तै मोहीबाट छोड पत्र गरिपाउँ भनी निवेदन गर्नेहरूमा १०७ वटा छोड पत्र भएको देखिन्छ। गोरखा जिल्लामा जग्गाधनीहरूको संख्या यसप्रकार छः–

| | |
|---|---|
| ९० रोपनीभन्दा धेरै जग्गा हुनेको संख्या | २५ |
| ५० रोपनीभन्दा माथि जग्गा हुनेको संख्या | १०३ |
| २० रोपनीभन्दा माथि जग्गा हुनेको संख्या | ८८४ |
| १० रोपनीभन्दा माथि जग्गा हुनेको संख्या | ३,६८१ |
| ५ रोपनीभन्दा माथि जग्गा हुनेको संख्या | ८,०६३ |
| ५ रोपनीभन्दा कम जग्गा हुनेको संख्या | २०,४५६ |
| जम्माः– | ३३,२१२ |

यसप्रकार यहाँ जग्गाधनीको जम्मा संख्या ३३,२१२ छ। गोरखा जिल्लामा पाँच रोपनीभन्दा कम जग्गा भएकाहरूको संख्या ज्यादा देखिन्छ। ९० रोपनीभन्दा बढी जग्गा हुनेहरूको संख्या २५ देखिए तापनि नापी गरी वास्तविक छानवीन गर्दा खास बढी देखिन नआएकोले वितरण सम्बन्धी केही कारवाही भएको छैन।

जिल्लाभित्र लगतबाट देखिएका घरघूरी जम्मा ३६,६४१ छन् । यी घर घूरीले चर्चेको मोठ नम्बरी खेत पाखोहरू वि. सं. १९९५ देखि २०२९ सालसम्म निम्नअनुसार देखिन्छः–

| | |
|---|---|
| अब्बल खेत | ३४ बीज मुरी |
| दोयम | २११ बीज मुरी |
| सीम | १,११७ बीज मुरी |
| चाहार | २,३११ बीज मुरी |
| किसिम नखुलेको | १३० बीज मुरी |

अन्दाजी १० बीज मुरी खेत र पांच बीज मुरी पाखो दर्ता नभएको देखिन्छ । यसरी दर्ता भएको र नभएको गरी जम्मा पाखो मुरी १,०२७ तथा खेत सबै किसिमको ३,८१५ देखिन आउँछ । खेतबाट वार्षिक रू. १,८७,६६६। र पाखोबाट रू. २४,६०६। मालपोत उठछ । यहाँ तालुकदारी प्रथाअनुसार नै मालपोत असूल उपर गरिन्छ । यो जिल्लामा खेतको मालपोत उठाउने जिम्मावाल २८१ जना र पाखाको सेर्मा उठाउने मुखिया ९४६ गरी जम्मा १,२२७ जना तालुकदारहरू छन् । यसमध्ये हाल १६ जना जिम्मावाल र १०४ जना मुखिया खाली भएको हुँदा सो स्थानमा माल अड्डाबाट नै अमानत तहसिल भइरहेको छ । यो जिल्लामा जम्मा ९८ वटा मौजाहरू छन् ।

पशुपालन

छिमेकी जिल्ला धादिङमा जस्तै यहाँ पनि फरक फरक हावापानीबाट प्रभावित क्षेत्रमा फरक फरक पशुहरू पालिएका पाइन्छन् । लार्के भोट र आसपासको लेकाली भागमा भेडा,च्यांग्रा, घोडा, कुकुर तथा चौंरी पालिन्छन् भने तलको होचो भागमा गाई, भैंसी, गोरु, बाख्रा आदि पालिन्छन् । पशु पालनको काम जाति विशेषमा पनि भर पर्दछ जस्तो क्षेत्री तथा बाहुनहरू गाई, गोरु, भैंसी र बाख्रा मात्र पाल्छन् भने मगरहरू सुंगुर पनि पाल्छन्। लेकतिर बस्ने गुरुङ र हिमाली जातीहरू चौंरी, भेडा र कुकुर ज्यादा पाल्छन् । यहाँ गाई र भैंसी गोरसको लागि पालिन्छ र गोरु खेतबारी जोत्ने कामको निम्ति । बाख्रा खासगरेर मासुको लागि पालिएको हुन्छ । भेडा मासु र ऊनको लागि प्रयोग गरिन्छ । चौंरीबाट पनि भारी बोकाउने र दूध खाने जस्ता दुई काम लिन सकिन्छ । कुकुरबाट घरबारी तथा खर्कको संरक्षणको काम लिइन्छ ।

यो जिल्लाको उत्तरी भेक जस्तै खरीबोट, सिमजुङ, बारपाक, लाप्राक, गुम्दा, उहिया आदि क्षेत्रहरूमा प्रशस्त भेडा पालिन्छ । बारपाकका करीब ३० प्रतिशत किसानको पेशा नै भेडा पालन भएको छ। एक परिवारले करीब २० देखि ४०० सम्म भेडा पालेको हुन्छ । यस क्षेत्रमा करीब ३,००० भेडा भएको अनुमान गर्न सकिन्छ । गोरखामा साझा (सहकारिता) को आधारमा पशु-पालन व्यवसायको विकास र विस्तार गर्न सकिने देखिन्छ । पाल्तु पशुहरु जस्तै जिल्लामा पाल्तु पक्षीहरू पाइन्छन् । यहाँका पाल्तु पक्षीहरूमा खासगरेर कुखुरा, परेवा र हाँस प्रचलित छन् ।

पशु–पालनमा साना जातको बाख्राको प्रचार भएको छ । ह्वाइटलेगहर्न, न्यू ह्याम्प–सायर जस्ता उन्नत जातका कुखुराको पनि जिल्लामा प्रचार हुन थालेको पाइन्छ । आँपपीपल, हर्मी, छोप्राक, गाईखुर,

पालुङटार, तारानगर तथा सिरानचोक आदि गाउँ पञ्चायत क्षेत्रहरूमा मुर्रा जातको राँगा र सानन जातको बोकाबाट नशलसुधार कार्य भइरहेछ। यी उन्नत जातका पशु–पक्षीहरू र यिनको पालन पोषण सम्बन्धी आधुनिक तरीका गाउँलेहरूले मनपराएका छन्। गोरखा जिल्लामा हालसम्म पशु चिकित्सालय स्थापना भएको छैन।

फलफूल खेती

अन्य पहाडी जिल्लामा जस्तै गोरखामा पनि विभिन्न किसिमका फलफूलहरू पाइन्छन्। केही शीतल हावापानी भएको ठाउँमा सुन्तला, कागती, निबुवा, नासपाती, ज्यामिर आदि पाइन्छन् भने केही गर्मी बस्तीमा भूइँकटहर, आँप, बेलौती, मेवा, केरा र लिची पाइन्छन्। यहाँको केरा, भूइँकटहर तथा कागती भने काठमाडौं र पोखरातिर प्रशस्त जान थालेको देखिन्छ।

यो जिल्लाको कतिपय ठाउँहरूमा रहरलाग्दा आँपका बगैंचाहरू छन्। क्यामुनाटारमा करीब ५०० बोट, आरु चनौटेमा १०० बोट र पालुङटार, छेपेटार, गाईखुरटार, धौराली आदि स्थानमा पनि यत्रतत्र आँपका बोटहरू छन्। भीरकोट, वकराङ, फिनाम, गाईखुर, रानीस्वाँर, मनकामना आदि ठाउँहरूमा सुन्तलाका बोटहरू छन्। लुइँटेल, खोपलाङ, पालुङटार आदि स्थानमा भूइँकटहर खेती प्रसिद्ध छ। पतझड फलफूल जस्तै स्याउ, आरु, ओखर, नासपाती आदिका बोटहरू कतै कतै पाइन्छन्। यस जिल्लामा एक सघन बागबानी विकास कार्यक्रम संचालन गरी लेकाली फलफूल हुने क्षेत्रमा लेकाली बगैंचा एक स्थापना गर्ने, किसानहरूलाई उन्नतजातका फलफूलका बिरुवा वितरण गर्ने, फलफूल खेती सम्बन्धी व्यावहारिक तालीम दिने र बिरुवा उत्पादन केन्द्रको शुरूआत गर्ने कामहरू हुनु आवश्यक देखिन्छ। गोरखा जस्तो पहाडी जिल्लाको फलफूल विकासको विभिन्न निकायमा साझा सहकारी पद्धति उपयोगी हुन सक्छ।

गोरखाको कृषि विकास कार्यालय मार्फत यहाँको फलफूल खेती विकास र विस्तार गर्नेतर्फ प्रयासहरू भइरहेका छन्।

कृषि विकास

वि. सं. २०१८ सालमा यो जिल्लामा ग्राम विकास केन्द्र खुलेदेखि नै कृषि विकास सम्बन्धी आधुनिक तरीकाहरूको प्रचार प्रसार हुँदै आएको थियो। २०२४ सालमा कृषि विकास कार्यालय स्थापना भएपछि यस भेकको कृषि व्यवसायमा केही आधुनिकीकरण भएको देखिन थालेको छ। किसानहरूले उन्नत बीउ, कीटाणु नाशक औषधि तथा रासायनिक मलको प्रयोग गर्न थालेका छन्। त्यस्तै पशु–पालन, फलफूल खेती र कुखुरा पालनमा पनि आधुनिक तरीकाहरू प्रयोग हुन थालेको पाइन्छ। यो जिल्लामा पहिले गहुँ लगाउने चलन ज्यादै कम थियो। यो खेती गर्नेतर्फ अहिले कृषकहरू प्रयत्नशील रहेका देखिन्छन्। माथि उल्लिखित विभिन्न बालीले ढाकेको जमीन र उत्पादन प्रक्रिया तालीकाबाट पनि गहुँ खेतीको स्थिति झल्किन्छ। थोर बहुत नगदे बाली लगाउने तर्फ पनि किसानहरू लागेका देखिन्छन्। साथै कृषि विकासको लागि हाल विभिन्न श्रोतबाट कृषकहरूलाई कृषि ऋणको पनि व्यवस्था गरिएको छ। कृषि विकासको लागि आवश्यक केही मल, बीउ तथा औजारहरू कृषि विकास कार्यालयबाट बिक्री वितरण गरिएको छ। २०२७।२८ देखि २०२९।३० सम्म तीन वर्षको बिक्री वितरण यसप्रकार छः–

| सामान | २०२७।२८ | २०२८।२९ | २०२९।३० |
|---|---|---|---|
| उन्नत बीज | १५.५६ मेट्रिक टन | ९.१९ | ४९.३६ |
| उन्नत मल | ३३.० ,, | ६०.४० | ११७.१६ |
| उन्नत औजार | – | – | २८ हलो, ८ रेक |
| औषधि (फलिडल) | १०.४९ लिटर | ७.५१ | ४० |
| औषधि (फलिडल डष्ट) | ४९ के. जि. | ५० | – |
| औषधि (डिप्टेक्स) | – | ३५६ के. जि. | ३५० लिटर |
| औषधि (मेटासिटक) | – | – | २४ लिटर |

यसरी गोरखा जिल्लाको कृषि विकासमा विगत एक दशकदेखि केही प्रयासहरू हुँदै आएका छन् तापनि टारहरूको सिचाइ नभएकोले खाद्यान्न उत्पादन उत्साहप्रद भएको मान्न सकिन्न । खाद्यान्न न्यूनताले गर्दा प्रायः प्रत्येक वर्ष गोरखाबासीहरूलाई बेसाहा खोज्नुपरेको छ । त्यस्तै पशु–पालनमा पनि केही विकास भएको मान्नु पर्छ तर पशु चिकित्सालय नभएबाट यो क्षेत्रमा मानिसहरू असजिलो अनुभव गरिरहेछन् ।

सिचाइ

गोरखा जिल्लाको करीब ५० प्रतिशत खेतमा स्थानीय जन श्रमबाट तयार गरिएका स-साना कच्ची वर्षे कुलोहरूबाट सिचाइ भएको छ भने ५० प्रतिशत जमीनमा आकाशे पानीको भर गर्नु पर्छ। यो जिल्लाका नदी नालाहरू सिचाइकार्यको लागि प्रयोगमा ल्याउन सकिएका छैनन्। यहाँका धेरै टारहरूमध्ये केही बाँझैछन् र केही-मा घैया, पिँडालु, मास, मकै जस्ता पाखेबाली लगाइन्छन्। यी टारहरू सिचाइ गर्न सकेमा जिल्लाको खाद्यान्न न्यूनता मात्र पूर्ति नभएर छिमेकी जिल्लाहरूलाई समेत गोरखाले पाल्न सकिने देखिन्छ । जिल्ला पञ्चायत र स्थानीय जनश्रमबाट बनेका केही कच्ची र अस्थायी कुलोहरू यसप्रकार छन्:–

| कुलोको नाम | लम्बाइ | | क्षमता | | |
|---|---|---|---|---|---|
| हर्मी भञ्जाङ कुलो | ५,८८० | फीट | ४०० | मुरी धान | उत्पादन हुन सक्ने |
| अलैंचे फुजेल कुलो | ९,२०० | " | ३०० | " | " |
| मकैसिङबुटार कुलो | १४,५४५ | " | ६०० | " | " |
| सिमजुङकलडुङ कुलो | ८,७१२ | " | २०० | " | " |
| गोहोरे फाँट कुलो | १३,३०५ | " | ७०० | " | " |
| फिनाम जामुने कुलो | २१,५४९ | " | ५०० | " | " |
| ताङलीचोक गोर्दी कुलो | १५,५१२ | " | १,५०० | " | " |
| ताकलुङ ठगुवा कुलो | १५,२१२ | " | १,२०० | " | " |
| फिनाम बेलटारी कुलो | १,२१४ | " | २०० | " | " |
| बुङकोट कुलो | १२५ | " | १०० | " | " |

आधुनिक तरीकाबाट यहाँका टारहरू सिचाइ गर्ने सम्बन्धमा उल्लेखनीय प्रगति केही भएको पाइँदैन। छेपेतारानगर गाउँ पञ्चायत अन्तर्गत सिर्दी खोलाबाट नहर ल्याई छेपेटार सिचाइ गर्ने बारे नहर विभागबाट एक पक्की नहर निर्माण कार्य भइरहेछ।। यो नहर योजना पूरा भएपछि २,८०० रोपनी जमीन सिचाइ हुनेछ।

सिचाइको सम्भाव्यता

यहाँका विभिन्न टारहरू जिल्लाको बीचमा र सीमानामा बग्ने खोलाहरूबाट सिचाइ गर्न सकिने सम्भावना छ। यी खोला, टार तथा सम्भावित योजनाबाट सिचाइ हुन सक्ने अन्दाजी क्षेत्रफल यहाँ उल्लेख गरिएको छ।

| श्रोत | सिचाइ हुन सक्ने अन्दाजी क्षेत्र | टार |
|---|---|---|
| चेपेखोला | ५०,००० रोपनी | पालुङटार, गाईखुरटार, बेलटार, च्याङ-लीङटार र र्हमिको तल्लो भाग लमजुङ जिल्लाका रागिनासटार, साइलीटार र अलकाटार पनि सिचाइ हुन सक्ने |
| लुदी खोला | ३,००० " | गडतोला टार, कुन्द्रूर टार |
| मुसुण्डी खोला | २,००० " | चोरकाटेटार |
| छादी खोला | १,५०० " | मजुवाटार |
| अँधेरी खोला | १,००० " | भइसेटार |
| झ्याल्ला खोला | १,२०० " | मुचोकटार |
| कोकदी खोला | ३,००० " | दरबुङ टार |
| कोकदी खोला | १,००० " | फुजेल खुटीटार |
| ज्यादुल खोला | ३,००० " | क्यामन टार |
| अँधेरी खोला | १,००० " | महादेव टारको पुछार |
| नामजुङ फुजेल खोला | ५०० " | घट्टटार |
| तान्द्राङ खोला (भीमसेनथापाको कुलो) | ७०० " | घाटबेंसी र बोर्लाङ |
| बुरलुङ तान्द्राङ खोला | ५०० " | धावा टार |
| इस्तुल खोला | २,००० " | आरुटार |
| दरौंदी नदी | २०,००० " | छेपेटार, नयाँ साँधु, खर र बेनी खोलाको बीचमा र ज्यादुल खोलाको तीनवटा गल्छी |

कृषि ऋण

वि.सं. २०२२ सालमा भूमिसुधार लागू हुनुभन्दा पहिले यहाँका कृषकहरूको लागि आवश्यक ऋण उपलब्ध गर्ने श्रोत साहू महाजन मात्र थिए। अहिले भूमिसुधार कार्यालय, सहकारी संस्था, ग्राम समिति र कृषि विकास बंक जस्ता सरकारी तथा अर्ध सरकारी संस्थाहरूबाट कृषि ऋण उपलब्ध गराउने व्यवस्था भइरहेछ।

संस्थागत ऋणमा केही नियमहरू पूरा गर्नु पर्ने र आवश्यक परेको क्षणमा तत्कालै उपलब्ध गर्न पनि असजिलो हुने हुँदा किसानहरू अझै पनि साहूको घरमा दगुर्छन्। संस्थाहरूले दिने ऋण छिटो छरितो र साधारण कागजी प्रक्रयाको भएमा गरीब कृषकहरू केही साहू महाजनको शोषणबाट मुक्त हुनेछन्।

सहकारी संस्था

यस जिल्लामा २०१६ सालदेखि २०२४ सालसम्ममा पटक पटक गरी १८ वटा सहकारी संस्थाहरू खुलेको देखिन्छ। यी संस्थाहरूमा कुटीर उद्योग सम्बन्धी एक, कृषि सम्बन्धी एक र बहुमुखी १६ थिए। यी संस्थाहरूको जम्मा सदस्य संख्या ३६६ र शेयर पूँजी २६,५६५। थियो। यी संस्थाहरूबाट चिताए जस्तो सुधार काम नभएकोले २०२४ सालमा विघटन गरिएको र भूमि सुधार कार्यक्रमको साथै सहकारी कार्यालय स्थापना भएको देखिन्छ। अब कृषि विकास बैंकबाट निर्दिष्ट सहकारी कार्यक्रम सञ्चालन गरिने व्यवस्था भएकोले सहकारितामा विश्वास राख्नेहरू आशावादी भएका छन्। यहाँ २०३० सालमा कृषि विकास बैंकको उपशाखा खुल्नु अघि तनहूँ जिल्लाको खैरेनीटारमा अवस्थित शाखा कार्यालयबाट कृषिऋणको व्यवस्था गरिएको थियो। हाल कृषि बैंकसित सम्बन्धित सबै कार्यहरू गोरखामा खुलेको जिल्लास्तरीय कार्यालयबाट भइरहेछ। यो बैंकले ग्राम समिति र सहकारी संस्था मार्फत किसानहरूलाई ऋण दिने गरेको छ। यसरी दिइने ऋण खासगरेर धान, गहुँ र मकै जस्ता बाली उत्पादन, नगदे बाली विकास, कृषि सामग्री खरीद, सिचाइ, कृषि उद्योग, बेचबिखन, पशुपालन तथा फलफूल खेती विकासको लागि गएको पाइन्छ। आवश्यकता हेरी व्यक्तिविशेषलाई पनि बैंकले सोझै ऋण दिएको देखिन्छ। २०३० साउन मसान्तसम्म कृषि विकास बैंकले गोरखा जिल्लामा वितरण गरेको ऋणको विवरण यसप्रकार छः—

| ऋण शीर्षक | ऋण रकम | ऋण शीर्षक | ऋण रकम |
|---|---|---|---|
| धान खेती | १८,३२०। | पावर टिलर, पम्पसेट | १४,०८२ |
| गहुँ खेती | १६,४१०। | भैंसी पालन | ८,२६४। |
| मकै खेती | ३४,६६६। | फलफूल खेती | ५,७००। |
| तोरी खेती | ३७५। | बाख्रा पालन | ५,०००। |
| मिल स्थापना | ६८,०००। | सुंगुर पालन | ७,२४३। |
| उपभोक्ता भण्डार | १०,०००। | | |

उपर्युक्त ऋण लिने संस्था, ग्राम समिति र व्यक्ति गरी जम्मा संख्या ७६४ छ।

## उद्योग

गोरखा जिल्लामा संगठितरूपले कुनै उद्योग व्यवसाय सञ्चालन भएको देखिंदैन। यहाँ चार वटा स-साना चामल मिलहरू र रजिष्टर्ड गरी चलाएको देखिन्छ। असंगठितरूपले अर्थात् घर घरमा चर्खा र तान राखेर जिल्लाको उत्तरी क्षेत्रमा राडी, पाखी, गलैंचा आदिको कुटीर उद्योग व्यवसाय गरेको देखिन्छ। त्यस्तै देउराली, मनकामना, भूंलीचोक, मकैसिङ आदि ठाउँहरूमा स्थानीय कपासको धागोबाट घरबुना र खाँडी कपडाहरू बुनेको पाइन्छ। यो जिल्लाका कपितय गाउँवासीहरू मौरोपालनमा पनि लागेका छन्। यहाँका वनहरूमा दार, कालीकाठ, कटहर जस्ता काठहरू पाइने हुँदा चुँदार जातिका केही मानिसहरू काठका ठेकी, फाँम आदि कुँद्ने काममा लागेका हुन्छन्। साथै केही लेकाली गाउँहरूमा स्थानीय साधनद्वारा नेपाली कागज बनाएको

पनि देखिन्छ । लापुबेंसीमा नेपाली कागज उद्योग खोल्न इजाजत पनि दिइएको छ । यसरी जिल्लाभरी छरिएर असंगठितरूपमा चल्दै आएका कुटीर उद्योगबाट उत्पादित वस्तुहरूको लागि बजारको व्यवस्था नभएबाट उत्पादकहरूले उचित मूल्य पाउन सकेका छैनन् । अतः यहाँ सञ्चालन हुन सक्ने कृषि र वन्य सम्पदामा आधारित घरेलु उद्योगहरूको लागि आवश्यक पूँजी, प्राविधिक ज्ञान र बजारको व्यवस्था भएमा अनुत्पादक भई कृषिमा आधारित जनश्रम उद्योग व्यवसायमा लाग्न सक्ने छ र जिल्लावासीहरूको नाजुक आर्थिक स्थितिमा केही सुधार हुनेछ । कृषि विकास बैंक, साझा सहकारी संस्था र घरेलु विभागको संयुक्त प्रयासबाट गोरखाको घरेलु उद्योग विकास विस्तार गर्न सकिने देखिन्छ ।

सम्भावित उद्योगहरू

यस जिल्लामा पाइने कच्चा पदार्थ, यातायात र विद्युत् शक्तिको अभाव तथा बजार व्यवस्था र चालू कुटीर उद्योगलाई हेर्दा यहाँ निम्नि उद्योगहरू स्थापना गरी सञ्चालन गर्न सकिने देखिन्छ :–

(१) डेरी उद्योग (पशु पालन) (२) सूती कपडा उद्योग (३) मौरी पालन उद्योग (४) राडी पाखी उद्योग (५) निगालो उद्योग (६) नेपाली कागज उद्योग (७) काठका भाँडा र फर्निचर उद्योग ।

डेरी उद्योग (पशु पालन)

यस जिल्लामा चरणको सुव्यवस्था गरी बेंसीतिर गाई, भैंसी, बोका, खसीको पालन गर्न सकिने देखिन्छ । उक्त काम सहकारिताको आधारमा असल जातका पशुहरूको पालन वैज्ञानिक तवरबाट गर्न सकेमा, दूधबाट बन्ने पदार्थ तथा मासुको लागि खसीहरू छिमेकी जिल्लाहरू वा शहरहरूमा पठाउन सकिने छ । यसको अतिरिक्त कृषिको निमित्त आवश्यक मलको पनि केही मात्रामा पूर्ति हुनजाने छ ।

यी पशुहरूबाट उत्पादित दूध, दही, चीज र घ्यू जस्ता पदार्थहरू तयार गर्ने उद्योगको स्थापना गर्न सकिने देखिन्छ । यी दुग्ध व्यवसाय सम्बन्धी उद्योग पनि सहकारिताको आधारमा साझा संस्था, कृषि विकास बैंक र स्थानीय व्यक्तिहरूद्वारा चलाउनु उपयुक्त हुनेछ ।

सूती कपडा उद्योग

यस जिल्लाको मनकामना, बोर्लाङ, क्यामुन्टार, नामेजुङ, भूमलीचोक आदि ठाउँहरूमा कपासको खेती हुन्छ । यसको तुरुन्त बिक्री गर्न नसकेको कारणबाट कृषकहरूले कपासको खेतीमा त्यतिको ध्यान नदिएर अन्न उत्पादनमा बढी ध्यान दिएको पाइन्छ । जिल्लाको आर्थिक स्थितितर्फ विचार गर्दा यस कपासको खेती जहाँ जुन ठाउँमा हुन सक्दछ सो स्थानहरूमा उन्नत बीउ, मल आदिद्वारा कपासको खेती वृद्धि गर्नु आवश्यक छ । यसको उत्पादन वृद्धि भएमा यस जिल्लामा कपडा बुन्ने उद्योग बढ्न सक्दछ जसबाट स्वदेशमा उद्योगको विकास तथा विस्तार हुन जानेछ र अर्कोतिर बेरोजगारी समस्या पनि केही मात्रामा हल हुनजानेछ । आधुनिक ढाँचाबाट कपडा तयार गर्ने यो जिल्लाका व्यावसायिक तथा दिलचस्पी भएका केही व्यक्तिहरूलाई श्री ५ को सरकारको घरेलु विभागमा तालीम दिनु आवश्यक छ । यसको अतिरिक्त यस घरेलु उद्योगको निमित्त आवश्यक औजार

सामानहरू तथा आर्थिक सहायता सो विभागबाट प्रबन्ध हुनु पर्ने देखिन्छ। यस किसिमको व्यवस्था भएमा कृषकहरूले उत्पादन गरेका कपास ती उद्योगीहरूले खरीद गर्नेछन्।

मौरी पालन

बेंसीतिर धेरैजसो घरमा मौरी पाल्ने काम गरेको देखिन्छ। यसबाट उत्पादन हुने मह आयुर्वेदिक औषधि, कन्फेक्सनरी जस्ता कार्यमा प्रयोग हुन्छ। विदेशतरि पनि यसको निकासी गर्न सकिन्छ। यो पनि एक किसिमको लाभदायक उद्योग देखिन्छ। यसको विस्तृत उत्पादन गर्न यस काममा लागेका तथा दिलचस्पी भएका जिल्लाका केही व्यक्तिहरूलाई मौरीपालन र महको उन्नत तरीकाबाट प्याकिङ गर्ने काममा तालीम दिलाउनु पर्ने हुन्छ। आवश्यकतानुसार तालीम प्राप्त व्यक्तिहरूलाई यस उद्योग स्थापना गर्न औजार तथा आर्थिक सहायताको प्रबन्ध हुनु पर्ने देखिन्छ।

राडी पाखी उद्योग

यस जिल्लाको बारपाक, लाप्राक, लार्कभोट, उहिया, गुम्दा तथा अन्य लेकतिर प्रशस्त भेडा च्याँग्रा पालनगरेको पाइन्छ। यस व्यवसायलाई वैज्ञानिक तवरबाट विस्तार गर्नु आवश्यक छ। असलजातका भेडाहरूको पालन, चरनको सुव्यवस्था र उपचार आदिको व्यवस्था हुनु जरूरी छ। यस किमिसको ज्ञान यस व्यवसायमा लागेका जनताहरूसँग बहुतै कम देखिन्छ। तसर्थ तिनीहरूलाई भेडापालन सम्बन्धी तालीम, असल जातका भेडाहरूको विक्री वितरण विधि आदिको ज्ञान दिलाउनु पर्दछ। जिल्लामा प्रचलित ऊनका सरसामानहरू उत्पादन गर्ने तरीका र औजार सामानहरू पनि पुरानै किसिमको देखिन्छ। यस व्यवस्थामा काम गरिरहेका र अरू चाहने व्यक्तिहरूलाई आधुनिक औजार माल–सामानहरू प्रयोग गर्ने तालीमको व्यवस्थाको साथै त्यस्ता औजार यस जिल्लामा उपलब्ध गर्ने प्रबन्ध पनि गर्नु पर्दछ। यस किसिमको व्यवस्थाबाट उत्पादन क्षमतामा वृद्धि हुने र उत्पादित सरसामानहरू पनि आधुनिक ढाँचाको हुन गई यसको विक्री काठमाडौं तथा वरपरका जिल्लाहरूमा पनि हुन सक्दछ।

निगालो उद्योग

यस जिल्लाको विभिन्न स्थानहरूमा निगालो पाइन्छ। यसबाट डोको, डालो, चित्रो, भकारी, मान्द्रो, थुन्से, स्याखु, छत्री तयार गरिन्छन्। यी वस्तुहरू यस जिल्लाको निमित्त आवश्यक छन्। आधुनिक तरीकाबाट यसको उद्योगमा वृद्धि हुन गएमा केही मात्रामा जनताको आर्थिक स्तर वृद्धि हुन जानेछ। यस निगालोबाट नौलो वस्तुहरू उत्पादन गर्नुको साथै भइरहेको उत्पादित वस्तुहरू पनि आधुनिकीकरण गर्न यस व्यवसायमा लागेका केही व्यक्तिहरूलाई तालीम दिने व्यवस्था हुनु पर्ने देखिन्छ। यस उद्योगको उत्पादन क्षमतामा वृद्धि हुनुको साथै उत्पादित वस्तुको गुण तथा हेराइमा राम्रो भएमा, काठमाडौं तथा वरपरका जिल्लाहरूमा पनि यसको विक्री वितरण हुन सक्ने देखिन्छ।

नेपाली कागज

यस जिल्लामा विद्यालयहरूको संख्या तथा कार्यालयहरू पनि बढ्दै गइरहेको हुँदा कागजको माग

बढी हुनु स्वाभाविकै देखिन्छ । यसको आवश्यकता पूर्ति गर्न सकेमा देशको धन बाहिर नजानुको साथै देशको कच्चा माल सामान उपयोग हुनु र बेकारी समस्या पनि केही मात्रामा हल हुन सक्ने देखिन्छ । जिल्लामा यस उद्योग तर्फ विचार गर्दा यसको लागि आवश्यक कोरा सामान दुईमा, लार्के,गुम्दा, लाप्राक, फिनाम आदि स्थानहरूमा पाइने हुँदा यी ठाउँहरूको केन्द्र पर्ने गरी कागजको उद्योग स्थापना गर्नु पर्ने देखिन्छ । यस्तो उद्योग आधुनिक तवरबाट गर्न यस व्यवसायमा लागेका केही योग्य व्यक्तिहरूलाई तालीमको प्रबन्ध हुनु पर्ने देखिन्छ ।

यस जिल्लाको यातायात, बजार, विद्युत् शक्तिको खपत आदिको विचार गर्दा ठूला उद्योगहरू सञ्चालन गर्न हालको स्थितिमा सम्भावना देखिंदैन । चौतर्फी यातायातको विकास नभएसम्म सिर्फ घरेलु तथा ग्रामीण उद्योगको मात्र विकास गर्ने काममा ध्यान एकत्रित गर्नु उचित देखिन्छ ।

काठका भाँडा र फर्निचर

जिल्लाको दक्षिण धुवाकोट, च्याङ्ली र आरूघाटतर्फ समेत ठेकी भाँडाको काम चुनंराहरूबाट भइरहेकै छ । साथै गोरखाको जङ्गलमा चाँप,दार जस्ता काठ पाइने हुँदा फर्निचर उद्योग राम्रोसँग चल्ने देखिन्छ ।

अन्तःशुल्क

यो जिल्लामा अन्तःशुल्क तिर्ने औद्योगिक प्रतिष्ठानहरू ज्यादै कम छन् । त्यसकारण यहाँ छुट्टै अन्तःशुल्क कार्यालयको स्थापना भएको छैन । अन्तःशुल्क उठाउने काम हाल माल कार्यालयले गरिआएको छ । अन्तःशुल्क तिर्ने उद्योगहरूमा १९ अश्व शक्तिका दुई र १० अश्व शक्तिका दुई गरी जम्मा चारवटा चामल मिलहरू छन् । मदभट्टीठेक्का र मादक पदार्थ इजाजत दस्तूरबाट पनि केही अन्तःशुल्क जम्मा हुन्छन् ।२०२६।२७ देखि २०२९।३० सम्म जम्मा चार वर्षको अन्तःशुल्क रकम यसप्रकार छः–

| | |
|---|---|
| २०२६।२७ | रू. ४५३। |
| २०२७।२८ | रू. २,६१५। |
| २०२८।२९ | रू. १,९८०। |
| २०२९।३० | रू. १३,४६६। |

## व्यापार

गोरखा जिल्लाको व्यापारिक गतिविधिमा उल्लेखनीय चहल पहल छैन । थोर बहुत जिल्लास्तरीय खरीद बिक्री तथा आयात निर्यात जे जति हुन्छ त्यसको लागि पोखरीथोक बजार र आरूघाट बजारको प्रमुख भूमिका रहेको देखिन्छ । यसको अतिरिक्त मनकामना, लुइँटेल, बाह्रपिर्के, छेपेटार, ठाँटीपोखरी जस्ता स-साना बजारमा केही व्यापारिक कारोबार हुन्छ हालै मात्र जिल्लाको सदरमुकाममा व्यापार संघको स्थापना भएको छ । यस जिल्लाको लार्के भोट र लेकाली वनहरूमा पाइने जरीबूटी, ऊन, चौंरीको पुच्छर र केही राडी पाखीहरू यहाँबाट निर्यात हुने मुख्य वस्तु भन्नु पर्दछ । यसको अतिरिक्त जिल्लाको बेंसी भागतिरबाट केहीमात्रामा घ्यू, भटमास र फलफूल निर्यात हुन्छ । यहाँको लागि आवश्यक कपडा, नून, तेल, मसला जस्ता दैनिक आवश्यक

सामग्रीहरू काठमाडौं, वीरगञ्ज र भैरहवातिरबाट आयात गरिन्छ । पोखरीथोक र आरूघाट बजारमा केही थोक विक्रेताहरू पनि छन् । व्यापारमा लाग्नेहरूमा खास गरेर नेवार जातिहरू छन् । यो जिल्लामा विदेशी व्यापारीहरू छैनन् । जिल्लाका अन्य जातिहरू अधिकांश कृषि व्यवसायमा नै लागेको पाइन्छ । कामी, दमाई, सार्की आदि जातिका मानिसहरू क्रमशः भाँडा कुँडा र कृषि औजार बनाउने, लुगा सिउने र जुत्ता सिउने जस्ता परम्परागत पेशामा लागेका हुन्छन् ।

भन्सार

यस जिल्लाको उत्तरमा चीन छोएको र ग्याला भञ्ज्याङमा नाका परेकोले मालसामान निकासी पैठारी हुने हुँदा भन्सार कार्यालय रहेको छ । यस भन्सारको नाम सिर्दिवास हो । यो भन्सार सिर्दिवास गाउँ पञ्चायतमा पर्दछ । यो ठाउँ नाका परेको ग्याला भञ्ज्याङबाट २१ कोस दक्षिणमा पर्छ । यस भन्सारले लार्के भोट र धादिङको स्यारभोट समेतको काम गर्दछ । असोजदेखि वैशाखसम्म हिउँको कारणबाट उक्त भञ्ज्याङबाट निकासी पैठारी नहुने हुनाले सो समयमा सिर्दिवासबाट नै कार्यालयले काम गर्दछ । अन्य महीनामा अर्थात् जेठ देखि भदौसम्म आवत जावत पनि हुने र निकासी पैठारी पनि चल्ने हुनाले उक्त भन्सार कार्यालयबाट गोरखाको लार्के बाबुमा र धादिङको स्यार भोटमा शाखा खोली भन्सार लिने काम गरिन्छ ।

बैंक सेवा

गोरखा जिल्लाको सदरमुकाम पोखरीथोकमा राष्ट्रिय वाणिज्य बैंकको एक शाखा कार्यालय छ । यो बैंकले यस भेकका सरकारी, अर्ध सरकारी तथा गैर सरकारी संघ, संस्था, पञ्चायत र व्यक्तिहरूको डिपोजिट राख्ने, कर्जा दिने, हुण्डी तथा मेलट्रान्स्फरको भुक्तानीको व्यवस्था गर्ने जस्ता कार्यहरू गरिआएको छ । यहाँ सुन, चाँदी धितो राखेर कर्जा लिनेहरूको संख्या ३,२०६; बैंकमा चल्ती तथा मुद्दती खाता खोली रकम जम्मा गर्नेहरूको संख्या ४००; रकम स्थानान्तरण गर्नेहरूको संख्या ७०० र रकम भुक्तानी लिनेहरूको संख्या ११,००० पुगेको छ । यो बैंकले सुन, चाँदीको अतिरिक्त लत्ता, कपडा, सरकारी तथा गैर सरकारी कागजात, गल्ला अन्नपात र केही धातुहरू धितो राखेर पनि लगानी गर्ने गरेको छ । २०३० असार मसान्तसम्म यस बैंकले गरेको कर्जा लगानी जम्मा रू. १४,८५,६०१। पुगेको थियो । वाणिज्य बैंक भएर पनि बैंकले राष्ट्र बैंकको पनि काम गरेको पाइन्छ । सरकारी मौद्रिक कारोबार तथा राजस्व सम्बन्धी काम पनि यहीं बैंक मार्फत् हुन्छ ।

# यातायात र सञ्चार

## यातायात

प्रस्तावित गोरखा–मजुवा खैरेनी मोटर बाटो तयार नभएसम्म यो जिल्लाको यातायात समस्या यथावत नै रहने छ । परम्परागत गोरेटो, घोडेटो र गल्लीहरूबाट गोरखाबासीले गाउँ, बेंसी गरेका छन् । भीर, पाखा र पहरामा पाइतलासम्म अटाउने साधनको सिर्जना गरी लार्केबासीहरू समथर भू-भागतिर झरेका छन् । नजीकैबाट पृथ्वी राजमार्ग पोखरा गएपनि यातायातको दृष्टिबाट गोरखा जिल्ला निकै पिछडिएको छ । गोरखाबाट छिमेकी जिल्लाहरूमा जाने मूल बाटो र वरपरका केही मुख्य गोरेटोहरू यसप्रकार छन्ः–

### पूर्व–पश्चिम मूल बाटो

काठमाडौंबाट पोखरा जाने पुरानो मूल बाटो गोरखा जिल्ला भएर गएको छ । यो साविकको मूल बाटो आरूघाट बजारदेखि चेपेको साँगुसम्म करीब २८ किलोमिटर (नौ कोस) लामो छ । आरूघाटबाट पश्चिम लागेपछि इस्तुल खोलाको काठे पुल तरेर यो बाटो खानचोक भञ्ज्याङतिर लाग्छ । यो बीचमा पर्ने मोदी खोला कमसेकम ८० ठाउँमा तरेपछि कुवे पानी र खानचोक आइपुग्छ । त्यसपछि मसेल खोलाको तीरैतीर मसेल दोभान पुगेर दरौंदीको नयाँ साँगु तर्नु पर्छ । दरौंदी तरेपछि यो बाटो चोरकोटे, खोपलाङ, पुतलीखेत, लुइँटेल, वारपिर्के र ठाँटी पोखरी हुँदै राइनासटार नजीकै चेपेको दोभानमा पुग्छ । चेपेको पुल तरेपछि लमजुङ, तनहूँ र कास्की हुँदै यो मूल बाटो पोखरा जान्छ । पृथ्वी राजमार्ग नबनेसम्म यो बाटो ज्यादै चल्तीको थियो । छिमेकी जिल्लाहरू-मा आवत-जावत गर्ने र पैदल काठमाडौं जाने सोझो र सजिलो बाटो भएकोले अझ पनि यसको महत्व छँदैछ । आरूघाट बजारमा बूढी गण्डकी माथि झोलुङ्गे पुल छ । मोदी र मसेर खोलामा पुल छैन । आरूवाट,खानचोक, खोपलाङ, लुइँटेल तथा ठाँटी पोखरीमा स-साना बजारहरू पनि छन् । बटुवालाई खाने बस्ने पसल र भट्टीहरू छन् । यो बाटोको आसपासमा ठाँटी, पाटी, पौवा र चौताराहरू प्रशस्त छन् । यिनै चौतारामा भरियाहरू थकाई मार्छन् ।

### उत्तर–दक्षिण बाटो

आरूघाटबाट बूढीगण्डकीको आसपास हुँदै लार्के भञ्ज्याङ र ग्याला भञ्ज्याङ जाने पुरानो गोरेटो बाटो छ । लार्के भोट तथा नेपाल–तिब्बत सीमानासम्म जाने जिल्लाको एक मात्र यो उत्तर–दक्षिण बाटो

ज्यादै विकट छ । यो बाटोमा अठार सय खोला, आरखेत खोला, सोदी खोला, नौली खोला, मच्छे खोला, तातोपानी, हलचोक, ठाडो भञ्ज्याङ, भालु खोला, श्रृङ्गी खोला, ल्हो खोला र माया खोला जस्ता खोलाहरू पर्दछन् । आरूचनौटे, अरवाङ, थुमी स्वाँरा, लापु, गुम्बा, उहिया, सिर्दिवास, प्रोक तथा ल्हो पञ्चायत क्षेत्र हुँदै ग्याँला जाने यो बाटोमा पुलहरूको अभाव छ । तातोपानीमा तुहिन र ठाडो भञ्याङमा झोलुङ्गे पुलको मात्र व्यवस्था छ । करीब ११२ किलोमिटर अर्थात् ३५ कोस लामो यो बाटोमा पुलहरूको कमीले गर्दा वर्षामा आवागमन ज्यादै गाह्रो छ । हिउँदको हिउँ खप्न नसकी दक्षिणतिर झरेको लार्के भोटबासीहरू वर्षायाममा हिउँ पग्लेपछि आ-आफ्नो बस्तीमा फर्कन चाहन्छन् तर वर्षाको बाढी पैरोबाट खहरेहरू समेत बढ्ने र बूढीगण्डकीले पनि डरलाग्दो रूप लिने हुँदा यिनीहरूको लेक बेंसी गर्ने प्रकृया ज्यादै डरलाग्दो भएको छ ।

गोरखा–सतीघाट बाटो

यो ज्यादै पुरानो र चल्तीको बाटो हो । दरौंदी र मर्स्याङदीमा झोलुङ्गे पुल तरेपछि तनहूँ जिल्लाको भन्सारटार निस्केर बन्दीपुर हुँदै नारायणगढतिर जाने यो मूल बाटो गोरखादेखि सतीघाटसम्म करीब १९ किलोमीटर अर्थात् छकोस लामो छ । बीच बाटोमा पर्ने खारखोलो तीन ठाउँमा तर्नुपर्छ । सतीघाटमा डुङ्गा पनि लाग्छ । खार खोलाबाट उत्तर–पश्चिम लाग्यो भने यो बाटो पालुङटार तथा ठाँटी पोखरी हुँदै चेपेको दोभान नजीक पुग्छ । यहाँ मर्स्याङदीमा डुङ्गा तरेर तनहूँ जाने बाटो छ ।

गोरखा सदरमुकामबाट पृथ्वी राजमार्ग छुने गोरेटोहरू

गोरखा सदरमुकामबाट १६ किलोमिटर अर्थात् पाँच कोस दक्षिण–पश्चिम हिंडेपछि तनहूँ जिल्लाको खैरेनी मझुवा निस्कने पुरानो गोरेटो छ । खैरेनी मझुवामा पुगेपछि पृथ्वी राजमार्ग लाई छुने यो बाटोमा पर्ने दरौंदी र मर्स्याङदीमा पुल तर्नुपर्छ । त्यस्तै गोरखा सदरमुकामबाट दरौंदी, खार खोला, चुक्ती खोला र मर्स्याङदी हुँदै तनहूँको विमलनगर निस्कने २५ किलोमिटर (आठ कोस) लामो बाटो छ । दरौंदीमा पुल र मर्स्याङदीमा डुङ्गा तरेर विमलनगर जाने यो बाटो पनि निकै चल्तीको बाटो हो ।

गोरखाको सदरमुकामबाट मनकामना हुँदै दक्षिणतिर जाने १६ किलोमिटर (पाँच कोस) लामो बाटो छ । मनकामनाबाट झरेर मुङलिन घाट तरेपछि यो बाटोले पनि चितौन जिल्लामा पृथ्वी राजमार्ग लाई छुन्छ । बीचमा पर्ने लुदी खोलामा काठेपुल र मुङलिनमा झोलुङ्गे पुल तर्नुपर्छ । मनकामनाको दर्शनार्थ आवत-जावत गर्ने यात्री र यस भेकका मानिसको ओहोर दोहोरले गर्दा यो बाटो निकै चल्तीको देखिन्छ । गोरखाबाट दक्षिण–पूर्व लागेर धादिङ जिल्लाको बेनी घाटमा पुगेपछि पृथ्वी राजमार्ग छुने ३२ किलोमिटर (दस कोस) लामो एउटा अर्को बाटो छ । यो पनि निकै चल्तीको बाटो हो । गोरखाबाट कुरीनघाट जाने एउटा अर्को बाटो छ । करीब १८ किलोमिटर (छ कोस) लामो यो बाटो गोरखा वरपरका मानिसले नून, तेल र अन्य सामान आयात गर्ने मुख्य बाटो हो । लुदी खोला र जुग्दी खोलामा जङ्गार तरेपछि कुरीन घाटमा तुहिन तर्नु पर्ने यो बाटोले पनि चितौन जिल्लामा पृथ्वी राजमार्ग छुन्छ । कुरीन घाटमा पुल निर्माण हुँदैछ ।

अन्य बाटोहरू

नेपाल अधिराज्यका अरू पहाडी जिल्लामा जस्तै गोरखामा पनि एक गाउँबाट अर्को गाउँ तथा गाउँ-

बाट बेसी र एक पञ्चायतबाट अर्को पञ्चायतसम्म आवत जावत गर्ने कैयौं गोरेटो, घोडेटो र गल्लीहरू छन् । कैयन् भीर, पाखा र पहराका उकाला ओराला नागेर घर माइती गर्छन् यहाँका गाउँलेहरू । कैयन् खहरे, खोला र भञ्ज्याङहरू डुलेर घाँस दाउरा खेप्छन् यहाँका गाउँलेहरू । यहाँका असजिला गल्लीहरू र गोरेटाहरू गोरखा-बासीको निमित्त अभिन्न अङ्ग भइसकेका छन् ।

विमान स्थल

गोरखा जिल्लाको पालुङटारमा ४,००० फीट लम्बाइ र ४०० फीट चौडाइ भएको एक विमान-स्थल छ । यो विमानस्थलबाट गोरखा जिल्ला मात्र होइन छिमेकी तनहुँ र लमजुङ जिल्ला समेत लाभान्वित भएका छन् । सदर मुकामबाट पश्चिमपट्टि मर्स्याङदीको किनारामा अवस्थित यो विमानस्थल अझै फराकिलो पार्न सकिने ठाउँ छ तापनि १६ किलोमिटर अर्थात छकोस दक्षिणपट्टि पृथ्वी राजमार्गमा बस सेवा उपलब्ध भएकोले विमान सेवाको माग दिन प्रतिदिन घटेकोले विमानस्थल बढाउन पर्ने आवश्यकता महसूस भएको छैन ।

घाटहरू

यो जिल्लामा बग्ने चेपे, दरौंदी तथा बूढीगण्डकी र सीमानामा बग्ने त्रिशूली एवं मर्स्याङदीमा कैयन घाटहरू छन् । यी घाटहरू यातायातको दृष्टिबाट त उपयोगी छँदैछन् साथै धार्मिक चाडबाड पर्वमा लाग्ने मेला-हरू पनि प्रायः नदी किनाराका घाटहरूमा नै लाग्ने हुँदा सांस्कृतिक तथा धार्मिक दृष्टिबाट पनि महत्वपूर्ण छन् । गोरखा जिल्लाका केही घाटहरू यसप्रकार छन् :—

| | | |
|---|---|---|
| खोला घाट | मर्स्याङदी | डुङ्गा लाग्ने |
| चेपे घाट | मर्स्याङदी | डुङ्गा लाग्ने |
| कुरेनी घाट | त्रिशूली | डुङ्गा लाग्ने |
| दरौंदी घाट | त्रिशूली | डुङ्गा लाग्ने |
| बोर्लाङघाट | बूढीगण्डकी | डुङ्गा लाग्ने |
| बेनी घाट | त्रिशूली | डुङ्गा लाग्ने |
| भूमली चोक | त्रिशूली | तुहिन लाग्ने |
| बुङकोट घाट | बूढीगण्डकी | तुहिन लाग्ने |
| ज्यामिरे घाट | त्रिशूली | तुहिन लाग्ने |
| अरखेत घाट | बूढीगण्डकी | तुहिन लाग्ने |
| तातोपानी | बूढीगण्डकी | तुहिन लाग्ने |
| सतीघाट | मर्स्याङदी | झोलुङ्गेपुल |
| देउदी घाट | मर्स्याङदी | झोलुङ्गेपुल |
| मझुवा घाट | मर्स्याङदी | झोलुङ्गेपुल |
| मुङलिन घाट | त्रिशूली | झोलुङ्गेपुल |
| दर्मुङ घाट | बूढीगण्डकी | झोलुङ्गेपुल |
| ठाडो भरेङ घाट | बूढीगण्डकी | झोलुङ्गेपुल |

| | | |
|---|---|---|
| बुर्धासिङ घाट | चेपे नदी | झोलुङ्गेपुल |
| पाँडे बेसी | चेपे नदी | झोलुङ्गेपुल |
| इस्तुल खोलो | आरूघाट | झोलुङ्गेपुल |
| नयाँ साँग घाट | दरौंदी | झोलुङ्गेपुल |
| भालू स्वाँरा | दरौंदी | झोलुङ्गेपुल |
| रामदी दोभान | दरौंदी | झोलुङ्गेपुल |
| आरूघाट | बूढीगण्डकी | झोलुङ्गेपुल |

यी घाटहरूमा हिउँदताका निकै मानिसहरू ओहोर–दोहोर गर्दछन् । माथि उल्लिखित घाटहरूमध्ये ठेक्का पट्टा गरिएका केही घाटहरूको आम्दानी निम्न बमोजिम छ :–

| घाट | वार्षिक आम्दानी |
|---|---|
| बोर्लाङ घाट | रू. ७००। |
| बुङकोट घाट | रू. ३०५। |
| बेनी घाट | रू. ९६५। |
| चरौंदी घाट | रू. ३९०। |
| कुरेनी घाट | रू. ४,०१०। |
| मझुवा घाट | रू. ६,७७५। |
| सती घाट | रू. ४,८३८। |
| जम्मा सात घाटबाट | रू. १७,९८३। |

बेनी घाट, चुम खोला, कुरेनी घाट, लुदी खोला, बालुवा वारपाक, झ्याल खोला, हुँडी खोला, केराबारी तथा फाउदी दोभानमा झोलुङ्गे पुल निर्माण कार्य सञ्चालन भइरहेका छन् ।

## सञ्चार

गोरखा जिल्लाको सदरमुकाममा एक आकाशवाणी केन्द्र स्थापना गरिएको छ। आर्थिक वर्ष २०२९।३० मा यो आकाशवाणी केन्द्रबाट १,६३६ खबर लिएको र १,५३८ खबर दिएको देखिन्छ । यस केन्द्रबाट गण्डकी अञ्चलका सबै जिल्लासित सम्पर्क राख्न सकिन्छ । साथै अञ्चल कार्यालय पोखरा तथा राजधानीसित पनि सोझै सम्पर्क हुन्छ । अन्यत्र सम्पर्क कायम गर्नुपर्दा काठमाडौं मार्फत् गर्नु पर्द छ ।

वि. सं. २००६ सालमा निर्माण गरिएको काठमाडौं–भैरहवा ट्रंक टेलिफोनलाइन त्रिशूली, धादिङ गोरखा, कुन्छा, पोखरा तथा पाल्पा हुँदै गएको छ। तर यो लाइन ठाउँ ठाउँमा मर्मत गर्नु पर्ने भएकोले हाल जिल्ला भित्र मात्र सीमित छ । यो लाइनबाट काठमाडौं वा पोखरामा सम्पर्क हुन सकेको छैन । यो टेलिफोनको मुख्य लाइनबाट पालुङटारको विमानस्थल र प्रमुख जिल्ला अधिकारीको कार्यालयसम्म टेलिफोनलाइन जडान गरिएको छ ।

गोरखा उपल्लाकोटमा माइक्रोवेभ (टावर) जडान कार्य प्रायः समाप्त भइसकेको छ। यहाँबाट पोखरा र काठमाडौंसँग सम्पर्क कायम छिटै हुने भएको छ।

हुलाक

गोरखा जिल्लाको विभिन्न ठाउँमा छवटा छोटी हुलाक र छवटा अतिरिक्त हुलाक गरी जम्मा १२ ठाउँमा हुलाकहरू छन्। यी हुलाकहरू रहेको पञ्चायत र स्थान तथा हुलाकको स्तर यसप्रकार छन् :–

| हुलाकको नाम र किसिम | पञ्चायत | स्थान |
|---|---|---|
| गोरखा छोटी हुलाक | गोरखकाली | पोखरीथोक |
| लुइँटेल छोटी हुलाक | गाईखुर | लुइँटेल बजार |
| आँप पीपल छोटी हुलाक | आँप पीपल | आँप पीपल भञ्ज्याङ |
| भच्याक छोटी हुलाक | हंसपुर | भच्याक बजार |
| आरूघाट छोटी हुलाक | आरूचनौटे | आरू घाट बजार |
| बतासे छोटी हुलाक | ताङलीचोक | कुवापानी |
| वारपाक अतिरिक्त हुलाक | वारपाककोट | वारपाक |
| ध्याम्पेसाल अतिरिक्त हुलाक | मसेल | सानोखाञ्चोक |
| ताकु पालफु अतिरिक्त हुलाक | ताकुकोट | ताकु भञ्ज्याङ |
| बुङकोट अतिरिक्त हुलाक | बुङकोट | हरिया |
| मनकामना अतिरिक्त हुलाक | मनकामना | बजार |
| धुवाँकोट अतिरिक्त हुलाक | धुवाँकोट | भीरबास |

उपर्युक्त विभिन्न हुलाकहरू मार्फत् आर्थिक वर्ष २०२९।३० मा यो जिल्लामा आएका र यहाँबाट बाहिर पठाइएका पत्रहरूको विवरण निम्नानुसार छः–

| विषय | का. स. | रजिष्टर्ड | बीमा | चिठी | एरोग्राम | छापा |
|---|---|---|---|---|---|---|
| दर्ता चलान भएको | १४,००८ | ११,१५१ | १९ | १,४१,७३० | ६,५६० | — |
| डेलिभरी गरेको | १३,८९५ | ११,४४७ | २६८ | २,३४,६१० | ४८,४३५ | १३,७०२ |

यसरी गोरखा जिल्लाबाट एक वर्षमा चलेको जम्मा १,७३,४६८ र यस जिल्लामा आएको जम्मा २,९४,१८७ गरी कुल ४,६७,६५५ थान चिठी पत्रहरू आवत जावत भएको देखिन्छ। यो जिल्लाको जिल्ला-स्तरीय कार्यालयहरू भएको ठाउँ पोखरीथोक क्षेत्रमा बढी संख्यामा चिठीपत्र आउने जाने देखिन्छ। त्यसपछि उत्तरी भेकका गुरुङ बस्तीहरू बाक्लो भएको पञ्चायत क्षेत्रमा धेरै चिठी पत्र आवत-जावत हुन्छ। यी गुरुङ जातिहरू देश विदेशको सैनिक सेवा तथा अन्य पेशामा निकै लाग्ने हुँदा गोरखा जिल्लामा गुरुङहरूको चिठी पत्र अत्यधिक आएको र गएको पाइन्छ।

# शिक्षा, स्वास्थ्य तथा खानेपानी

## शिक्षा

साक्षरताको क्षेत्रमा गण्डकी अञ्चलको स्थान उत्साहबर्धक मानिएको छ तर यो अञ्चलमा पर्ने सात जिल्लाको शैक्षिक गतिविधिलाई तुलनात्मक दृष्टिले हेर्दा गोरखाकोस्थिति सन्तोषप्रद छैन। यहाँको साक्षरता प्रतिशत कास्की जिल्लाको साक्षरताभन्दा १३.१ प्रतिशत कम छ र मनाङकोभन्दा ६.९ प्रतिशत मात्र माथि छ। अतः गण्डकी अञ्चलका सात जिल्लाहरूमा गोरखाको स्थान छैठौं हुन आउँछ। जिल्लाको मध्य एवं दक्षिणी भागमा शैक्षिक गतिविधि प्रशस्त देखिन्छ तर उत्तरी भागमा अवस्थित कैयन् गाउँ बेंसी र बस्तीहरू ज्यादै पिछडिएकोले यहाँको साक्षरताको प्रतिशत यसरी घट्न गएको हुनसक्छ तर गोरखा जस्तै लेक, बेंसी र हिमाली पाखाहरूले बनेको छिमेकी जिल्ला धादिङको ५.२ प्रतिशत साक्षरताको तुलनामा भने यसको ११.६ प्रतिशत साक्षरता प्रशंसनीय मान्नुपर्दछ।

यो जिल्लामा छ वर्षभन्दा माथि उमेर भएका मानिसहरूको संख्या जम्मा १,४७,७५९ छ। यसमध्ये ७३,८५० जना पुरुष र ७३,९०९ जना महिला छन्। यो जनसंख्यामा पुरुष १५,३७२ अर्थात् २०.८ प्रतिशत र महिला १,७६० अर्थात् २.४ प्रतिशत गरी जम्मा १७,१३२ जना (अर्थात कुल जनसंख्याको ११.६ प्रतिशत) साक्षर छन् अथवा गोरखा जिल्लामा पुरुष र महिला गरी जम्मा १,३०,६२७ जना अर्थात् ८८.४ प्रतिशत जनता निरक्षर छन्। पाँच वर्षभन्दा माथिको उमेर समूहमा पर्ने १७,१३२ साक्षर जनसंख्यालाई विभिन्न उमेरमा विभाजन गरी हेर्दा त्यसको रूपरेखा निम्नानुसार देखिन आउँछः–

साक्षरताको तालिका

| उमेर समूह | पुरुष | | | महिला | | | कुल संख्या | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | जम्मा | साक्षर | प्रतिशत | जम्मा | साक्षर | प्रतिशत | जम्मा | साक्षर | प्रतिशत |
| ६ – ९ | ९,४५० | १,४०९ | १४.९ | ९,१९३ | ३४९ | ३.८ | १८,६४३ | १,७५८ | ९.४ |
| १० – १४ | ११,४६० | ३,६४८ | ३१.८ | १०,२०३ | ६०६ | ५.९ | २१,६६३ | ४,२५४ | १९.६ |
| १५ – १९ | ९,४५० | २,९८८ | ३१.६ | ८,८८४ | ३५७ | ४.० | १८,३३४ | ३,३४५ | १८.२ |
| २० – २४ | ६,९९१ | १,९१५ | २७.४ | ७,३०४ | १६८ | २.३ | १४,२९५ | २,०८३ | १४.६ |
| २५ – २९ | ६,०८१ | १,२५९ | २०.७ | ६,७५९ | ८४ | १.२ | १२,८४० | १,३४३ | १०.५ |
| ३० – ३४ | ५,३११ | ९५२ | १७.९ | ५,९७० | ५५ | .९ | ११,२८१ | १,००७ | ८.९ |
| ३५ – ३९ | ५,३१५ | ७८१ | १४.७ | ५,४८० | ४६ | .९ | १०,७९५ | ८२७ | ७.७ |
| ४० – ४४ | ४,५५८ | ६१० | १३.४ | ४,८८९ | २२ | .४ | ९,४४७ | ६३२ | ६.७ |
| ४५ – ५४ | ७,००३ | ९७४ | १३.९ | ६,८२६ | ३४ | .५ | १३,८२९ | १,००८ | ७.३ |
| ५५ – ६४ | ४,६७९ | ५०४ | १०.८ | ४,८४५ | २२ | .५ | ९,५२४ | ५२६ | ५.५ |
| ६५ माथि | ३,५५२ | ३३२ | ९.३ | ३,५५६ | १७ | .५ | ७,१०८ | ३४९ | ४.९ |
| जम्मा | ७३,८५० | १५,३७२ | २०.८ | ७३,९०९ | १,७६० | २.४ | १,४७,७५९ | १७,१३२ | ११.६ |

यो तालिका अनुसार छदेखि नौ वर्षको उमेर समूहमा पर्ने ९.४ प्रतिशत मात्र केटाकेटी साक्षर भएको र १० देखि १४ वर्ष को उमेर समूहमा सबैभन्दा धेरै अर्थात् १९.६ प्रतिशत साक्षर रहेको देखिन्छ। १५ वर्षभन्दा माथिको उमेर समूहमा साक्षरताको प्रतिशत क्रमशः कम हुँदै गएको पाइन्छ। छ वर्षदेखि १४ वर्षको उमेर भित्र पर्ने केटीहरूमा साक्षरताको प्रतिशत उत्साहप्रद नै मान्नुपर्दछ। त्यसपछि यो प्रतिशत पनि घट्तै जान्छ तापनि २४ वर्ष सम्मका महिलाहरूको साक्षर संख्या त्यति निराशपूर्ण छैन। यसबाट के अनुमान गर्न सकिन्छ भने देशमा प्रजातन्त्रको प्रादुर्भाव भएपछि महिला जगतमा पनि लेखपढ गर्ने जागृति आएको देखिन्छ।

गोरखा जिल्लामा छ वर्षदेखि नौ वर्ष सम्मका बालक बालिकाहरूको संख्या १८,६४३ छ। तर यसमध्ये १,७५८ मात्र साक्षर छन्। यसबाट के देखिन्छ भने शिक्षोपार्जनको लागि विद्यालयमा जानुकोसट्टा केटाकेटीहरू गोठालो जान्छन् र प्रत्यक्ष वा अप्रत्यक्ष रूपबाट आर्थिक गतिविधिमा भाग लिन्छन्। आर्थिक वर्ष २०२९।३० मा साक्षरता अभियानको सिलसिलामा ७५ कक्षाहरू खोली सञ्चालन गरिएको थियो। नेपाल महिला संगठनबाट पनि २२ कक्षाहरू सञ्चालन भएका थिए।

यो जिल्लाका ६३ वटा गाउँ पञ्चायतमा विभिन्न स्तरका १५५ वटा शिक्षण संस्थाहरू सञ्चालन भइरहेका छन्। यो संख्यामध्ये सातवटा माध्यमिक विद्यालय, १६ वटा निम्न माध्यमिक विद्यालय र १३२ वटा प्राथमिक विद्यायल छन्। उपर्युक्त सातवटा माध्यमिक विद्यालयहरू रहेका स्थान र तिनीहरूमा अध्ययन गर्ने छात्रछात्राहरू तथा पढाउने शिक्षक शिक्षिकाहरूको संख्या यसप्रकार छः—

| विद्यालय | पञ्चायत | माध्यमिक शिक्षक संख्या | माध्यमिक छात्रछात्रा संख्या |
|---|---|---|---|
| अमर ज्योति विद्यालय | पालुङटार | ७ | ९६ |
| विजय भवानी विद्यालय | मर्कीसिङ | ५ | ४६ |
| मण्डली माध्यमिक विद्यालय | छोप्राक | ६ | ५० |
| परोपकार आदर्श विद्यालय | जौबारी | ५ | ५९ |
| शक्ति विद्यालय, पाटेचौर | रानीस्वाँरा | ८ | २५७ |
| लक्ष्मी हाई स्कूल | गाईखुर | ६ | १०६ |
| भीमोदय हाई स्कूल | आरूचनौटे | ७ | ७१ |
| | जम्मा | ४४ | ६८८ |

प्राथमिकदेखि माध्यमिकसम्मका विभिन्न तहमा २०३१ असार मसान्तमा अध्ययन गर्ने छात्र छात्राको छुट्टा छुट्टै संख्या र तिनीहरूमा पढाउने शिक्षक शिक्षकहरूको विवरण यसप्रकार छ :—

| स्तर | छात्र | छात्रा | जम्मा | शिक्षक | शिक्षिका | जम्मा |
|---|---|---|---|---|---|---|
| माध्यमिक | ६५२ | ३६ | ६८८ | ४० | ४ | ४४ |
| निम्न माध्यमिक | १,८३४ | २४७ | २,०८१ | ७२ | ३ | ७५ |
| प्राथमिक | ६,३०८ | ९८६ | ७,२९४ | ४११ | १५ | ४२६ |

गोरखा जिल्लामा २०३० सालदेखि नयाँ शिक्षा योजना लागू भइसकेको छ । जिल्ला शिक्षा समितिको सरसल्लाह लिई जिल्ला शिक्षा अधिकारी कार्यालयबाट यहाँका शिक्षण संस्थाहरूको प्रशासनिक व्यवस्था हुन्छ । यहाँ शिक्षकलाई तालीम दिने कुनै संस्था छैन तर पोखरा स्थित शिक्षक तालीम संस्थानबाट यो व्यवस्था मिलाइएको छ । यो जिल्लाका शिक्षण संस्थामा काम गर्ने शिक्षकहरूले श्री ५ को सरकारको सम्बन्धित नियमानुसार तलब, भत्ता र अन्य सहूलियतहरू पाउँछन् । आर्थिक वर्ष २०२९।३० मा यहाँको शिक्षा प्रचार प्रसारको लागि श्री ५ को सरकारबाट रू. २,६५,९२३। प्राप्त भएको थियो । यसको अतिरिक्त स्थानीय जनताबाट नगद र जिन्सी गरी करीब ३,९२,०५६। रकम शिक्षा विकासमा खर्च गरिएको थियो । जिल्लाबासीहरूको आर्थिक स्थिति त्यति राम्रो नभएकोले शिक्षाको लागि स्थानीय अनुदान कम हुन सक्ने देखिन्छ ।

वि. सं. २०२८ सालमा श्री ५ को सरकार तथ्याङ्क विभागबाट लिइएको जनगणनाअनुसार देखिने छ वर्षभन्दा माथि उमेर भएको १,४७,७५९ जनसंख्या मध्ये १,३९,१६६ ले कुनै पनि तहको शिक्षण संस्थामा प्रवेश नै नगरेको देखिन्छ । बाँकी संख्या मध्ये ६,४२२ ले प्राथमिक तहमा, १,४२० ले निम्न माध्यमिक तहमा, ६२८ ले माध्यमिक तहमा र इण्टरमिडियट, स्नातक तथा स्नातकोत्तर तहमा क्रमशः ८६; ३१ र ६ जनाले प्रवेश गरेको पाइन्छ । प्राथमिक शिक्षाको तहमा प्रवेश गर्नेहरूको संख्या उल्लेखनीय नै मान्नु पर्दछ । तर माध्यमिक र उच्च शिक्षाको तहमा पुग्दा यो संख्या निकै कम भएकोबाट के प्रष्ट हुन्छ भने शिक्षामा अभिरुचि लिएर प्राथमिक विद्यालयमा प्रवेश गर्ने केटाकेटीहरूले पनि आर्थिक एवं अन्य समस्याहरूको कारणबाट अगाडि बढ्न पाएका छैनन् । उपर्युक्त तथ्याङ्कको अर्को एक तालिकाबाट के पनि देखिन्छ भने प्राथमिक तहमा ३,०६९; निम्न माध्यमिकतहमा ६१०; माध्यमिक तहमा ६२६ र इण्टरमिडियट,स्नातक तथास्नातकोत्तर तहमा क्रमशः ६३; ६३ तथा ५जनाले मात्र शिक्षा पूरा गरेको पाइन्छ। अन्ततः माथिका विभिन्न तथ्याङ्कहरूबाट के प्रष्ट हुन आउँछ भने गोरखा जिल्लामा वाञ्छित मात्रामा शिक्षा विकास भइसकेको छैन तापनि यहाँको शैक्षिक गतिविधि निराशापूर्ण छैन ।

## स्वास्थ्य

गोरखा जिल्लाको सदरमुकाम पोखरीथोकमा १५ शय्या भएको एक अस्पताल छ । यो अस्पतालमा तीन जना चिकित्सक,एक जना स्वास्थ्य परिचारिका तथा नौ जना स्वास्थ्य सहयोगीहरूको दरबन्दी छ। यातायातको कठिनाइले गर्दा यो अस्पतालमा आउने बिरामीहरूको संख्या निकै कम छ । आँप पीपल भञ्ज्याङमा मिशन अस्पताल भएकोले त्यस भेकका मानिसहरू सोही अस्पतालमा उपचार गर्ने, दक्षिण भेकका मानिसहरूलाई पृथ्वी राजमार्ग भएर बन्दीपुर वा पोखरा गई उपचार गराउन सजिलो पर्ने हुँदा पनि गोरखा अस्पतालमा बिरामीको संख्या कम भएको हुन सक्छ । आर्थिक वर्ष २०२९।३० मा ६,५९५ पुरुष, ३,१४२ महिला र २,७३९ शिशु समेत गरी जम्मा १२,४७६ बिरामीलाई सेवा उपलब्ध गराइएको थियो ।

पोखरीथोकको सरकारी अस्पताल र आँप पीपलको मिशन अस्पतालको अतिरिक्त यस जिल्लाका विभिन्न स्थानमा जम्मा सातवटा स्वास्थ्य चौकी र तीनवटा औषधालयहरू रहेका छन् । यी स्वास्थ्य चौकी तथा औषधालय रहेको स्थान र यिनीहरूबाट सेवा पुऱ्याएको बिरामीहरूको संख्या निम्नानुसार देखिन्छः—

| नाम | | गाउँ पञ्चायत | बिरामी संख्या |
| --- | --- | --- | --- |
| जौबारी स्वास्थ्य | चौकी | जौबारी | ७,०३५ जना (एक वर्षको) |
| खानचोक | चौकी | मसेल | नयाँ खुलेको |
| धुवाँकोट | चौकी | धुवाँकोट | ३४० जना (एक महीनाको) |
| लार्के | चौकी | प्रोक | – |
| मर्कसिङ | चौकी | मर्कसिङ | १,१५७ जना (एक महीनाको) |
| आरूचनौटे | चौकी | आरूघाट चनौटे | – |
| गुम्दा | चौकी | गुम्दा | – |
| जिल्ला प्रमुख औषधालय | | पालुङटार | ५,३०८ जना (एक वर्षको) |
| मनकामना | औषधालय | मनकामना | ५,२४६ जना (एक वर्षको) |
| दर्मुङ फुजेल | औषधालय | फुजेल | ५,७७६ जना (एक वर्षको) |

गोरखा जिल्लामा उल्लेखनीय नौलो रोग केही छैन। खासगरेर पौष्टिक आहारको कमी र पानीको खराबीबाट हुने रोगहरू नै ज्यादा देखिन्छन्। धामी झाँक्रीद्वारा फुकफाक गरेर उपचार गर्न खोज्ने परम्परागत अन्धविश्वास यो जिल्लाका केही गाउँहरूमा अझै पनि पाइन्छ। खासगरेर खरानी मन्तर गरी खाने, कुचोले झारफुक गर्ने, देवदेवीको भाकल गरी बलि चढाउने र ज्यूमा द्यौता प्रवेश गराएर झाँक्री बस्ने तथा खली खेल्ने जस्ता प्रचलनहरू प्रयोगमा ल्याएको देखिन्छ। यस किसिमबाट उपचार गर्न प्रयास गर्नेहरूलाई धामी, झाँक्री, लामा, वैद्य, जैसी, जान्ने आदि भन्दछन्।

यस जिल्लामा २०२६ सालमा परिवार नियोजन तथा मातृ शिशु कल्याण केन्द्रको स्थापना भएको थियो तत्पश्चात यो कार्यालयले जिल्लाबासीहरूलाई परिवार नियोजनको महत्व बोध गराउँदै आएको छ।

गोरखा जिल्लाका ६३ गाउँ पञ्चायतमध्ये ५३ पञ्चायतहरूमा औलो उन्मूलन संघको कार्य क्षेत्र बनेको छ। यी पञ्चायत क्षेत्रमा १,११८ गाउँका १६,३६९ घरमा बस्ने १,१०,५९६ जनताहरूले औलो उन्मूलन सम्बन्धी मासिक सेवा पाइरहेका छन्। यो सेवाको सिलसिलामा प्रत्येक महीना ज्वरको रोगीहरूको रगत जाँच गरी औषधोपचार गरिन्छ। आर्थिक वर्ष २०२९।०३० मा २६,६७३ जना रोगीहरूलाई ५४,५०० चक्की क्लोरोकुइन र ३०० चक्की प्रिमाकुइन वितरण गरिएको थियो। औलो उन्मूलन नभइसकेको क्षेत्रमा चैत-बैशाख ताका डी. डी. टी. छर्ने काम गरिन्छ। यो औलो उन्मूलन कार्यक्रमको प्रभावकारी कार्यान्वयनबाट यहाँका जनतामा राम्रो असर परेको छ। औलो र गर्मीको डरले वर्षौं देखि उपेक्षित बेंसी र टारहरू आबाद हुन थालेका छन्। यसबाट जिल्लाको कृषि उत्पादन वृद्धि गर्ने तर्फ मद्दत पुगेको छ।

वि. सं. २०२७ सालमा गोरखामा बिफर उन्मूलन कार्यको लागि जिल्ला स्तरीय कार्यालय स्थापना भएको थियो। त्यसपछि यहाँ बिफर विरुद्ध खोप लिनु पर्ने र यसको लागि जनता सक्रिय हुनु पर्ने कुराको जिल्लामा व्यापक प्रचार गरियो। २०३० सालमा १०,७१३ प्रथम खोप र ५७,७४८ पुनः खोप गरी जम्मा ६८,४६१ खोपहरू गरिएको थियो। जिल्लाको कुल जनसंख्याको अनुपातमा यहाँका करीब ३८ प्रतिशत जनता बिफर उन्मूलन कार्यबाट लाभान्वित भएका छन्। प्रारम्भदेखि अहिलेसम्म बिफर बिरुद्ध २,७७,४७१ खोपहरू गरिएको कुरा सम्बन्धित कार्यालयका जिल्ला अभिलेखबाट देखिन्छ। गोरखाबासीहरूले यस कार्यक्रमप्रति ज्यादै चाख लिएका छन्।

उपर्युक्त स्वास्थ्य संस्था र कार्यक्रमको अतिरिक्त गोरखा जिल्लाको आँपपीपल भञ्ज्याङमा १५ शय्याको एक अस्पताल र यस अन्तर्गत केही क्लिनिकहरू छन्। यो संस्थाले पनि यस भेकमा जनतालाई सन्तोषजनक सेवा दिंदै आएको छ।

## खानेपानी

अन्य पहाडी जिल्लामा जस्तै गोरखामा पनि खानेपानीको मुख्य स्रोतहरू खोला, खोल्सा, ढुङ्गे, पँधेरा कुवा र पोखरी नै हुन्। डाँडाको थली र भञ्ज्याङमा बस्नेहरूको लागि दुई–तीन घण्टा तल फेदीबाट पानी खेपेर खानु पर्ने समस्या गोरखा र यसको छिमेकी जिल्लाहरूको साझा समस्या हो तर अहिले जिल्ला पञ्चायत, गाउँ पञ्चायत, स्थानीय जनश्रम र स्थानीय विकास विभागको सहयोगबाट यो जिल्लाको केही स्थानहरूमा खाने पानीको राम्रो व्यवस्था भइसकेको छ। चालू भइसकेका केही खाने पानी योजनाहरू यसप्रकार छन्:—

| पञ्चायत वा स्थान | धारा संख्या | लाभान्वित जनसंख्या |
|---|---|---|
| आँपपीपल | २ | ३०० |
| गोरखकाली | १ | १,२०० |
| बुङकोट | ५ | १,१०० |
| मकैसिङ | ४ | ४०० |
| देउराली | १ | २०० |
| हर्मी | १ | १०० |
| सौरपानी | १ | ५०० |
| ध्यालचोक | १ | २०० |
| छोप्राक | १ | २०० |
| तौलीचोक | १ | १,५०० |
| गाँखु | १ | २०० |
| घुवाँकोट | १ | १,००० |

# प्रशासन र पञ्चायत

## प्रशासन

आजभन्दा करीब चारसय वर्ष पहिलेसम्म मुख्य गोरखाकोट र यसको आसपासको क्षेत्र खड्का राजाहरूद्वारा प्रशासित थियो । लिगलिंगमा घले राजाहरू प्रशासन गर्दथे र अन्य केही कोटहरूमा पनि स्थानीय राजाहरू थिए । त्यसपछि यी खड्का, घले र अन्य स-साना कोटहरू विजय गरी द्रव्य शाहले यहाँको राज्य व्यवस्था र दैनिक प्रशासन चलाउन थाले । रामशाहको पालामा गोरखा राज्यको सामाजिक, राजनीतिक, न्यायिक एवं आर्थिक क्षेत्रमा प्रशस्त प्रशासनिक सुधारहरू भए । पृथ्वीनारायण शाहले विशाल नेपालको सिर्जना गरी काठमाडौं उपत्यकामा देशको राजधानी कायम गरेपछि यो गोरखा जिल्लाको प्रशासनिक व्यवस्था पश्चिम दुई नम्बर गोश्वारा मार्फत हुन थाल्यो । पछि यहाँ बडाहाकिम रहने व्यवस्था भयो । पञ्चायती व्यवस्थाको सूत्रपात भएपछि नेपाल अधिराज्यलाई १४ अञ्चल र ७५ जिल्लामा विभाजन गरियो । तत्पश्चात गण्डकी अञ्चलाधीश कार्यालय पोखराको मातहतमा रही प्रमुख जिल्ला अधिकारी मार्फत यो जिल्लाको प्रशासकीय व्यवस्था भएको छ । अञ्चल र जिल्ला विभाजन भएपछि जम्मा ३६ वटा पुराना कोट र थुमहरू यो गोरखा जिल्लामा परेका छन् । यी कोट र थुमहरू निम्नानुसार छन् :–

| | |
|---|---|
| १. पोखरी थोक | २. बराह थोक |
| ३. छीपथोक | ४. मैदान |
| ५. राना थोक | ६. गुवाथोक |
| ७. हटिया थोक | ८. पीपल थोक |
| ९. पदैल थोक | १०. कान्तै स्वाँरा |
| ११. रानीस्वाँरा | १२. भोगटेनी |
| १३. मसेल | १४. बगुवा |
| १५ खानचोक | १६. वुङकोट |
| १७. गुरुङथोक | १८. घेरुङ |
| १९. अजिर कोट | २०. स्यारताङ |
| २१. अपुन | २२. छोप्राक |
| २३. खोपलाङ | २४. विरिंचोक (सात) |

२५. कुन्दुर (सात घर)
२६. लामगरा
२७. मिरकोट
२८. धुवाँकोट
२९. हर्मी
३०. तान्द्राङ
३१. दरभूङकोट
३२. वोर्लाङकोट
३३. अश्राङकोट
३४. आरूकोट
३५. लिगलिग कोट
३६. लकाङकालीकोट

गोरखा जिल्लाको सदरमुकाम गोरखकालीको नजीक दक्षिणपट्टि पाखामा अवस्थित पोखरीथोकमा रहेको छ। जिल्लास्तरीय धेरैजसो सरकारी एवं अर्ध-सरकारी कार्यालयहरू यही थोकमा रहेकाछन्। यी कार्यालयहरूको फेहरिस्त यसप्रकार छ :–

| कार्यालयको नाम | कार्यालय रहेको गाउँ पञ्चायत स्थान | |
|---|---|---|
| प्रमुख जिल्ला अधिकारीको कार्यालय, गोरखा | गोरखकाली गाउँ पञ्चायत अन्तर्गत पोखरीथोक | |
| जिल्ला कृषि विकास कार्यालय, गोरखा | ,, | ,, |
| जिल्ला अदालत | ,, | ,, |
| जिल्ला प्रहरी ईन्स्पेक्टर कार्यालय | ,, | ,, |
| जिल्ला भूमिसुधार कार्यालय | ,, | ,, |
| गोरखा माल कार्यालय | ,, | ,, |
| जिल्ला शिक्षा कार्यालय | ,, | ,, |
| गोरखा अस्पताल | रानीस्वाँरा गाउँ पञ्चायत पाटेचौर | |
| नेपाल परिवार नियोजन तथा मातृशिशु कल्याण योजना जिल्ला कार्यालय" | ,, | ,, |
| बिफर उन्मलन कार्यालय | ,, | ,, |
| प्राविधिक शाखा | ,, | ,, |
| सरकारी वकील शाखा | गोरखकाली गाउँ पञ्चायत पोखरीथोक | |
| सहकारी कार्यालय | ,, | ,, |
| औलो उन्मूलन संघ | ,, | ,, |
| गोरखा कारागार कार्यालय | ,, | ,, |
| गोरखा निर्वाचन आयोग जिल्ला शाखा | ,, | ,, |
| तथ्याङ्क सङ्कलन कार्यालय | ,, | ,, |
| जिल्ला पञ्चायत कार्यालय गोरखा | ,, | ,, |
| राष्ट्रिय वाणिज्य बैंक गोरखा | ,, | ,, |
| कृषि विकास बैंक गोरखा शाखा | ,, | ,, |
| टेलिफोन कुन्छा फाँट | ,, | ,, |
| टेलिफोन कार्यालय | ,, | ,, |
| आकाशवाणी स्याटेलाइट | ,, | ,, |
| नेपाल वायु सेवा निगम कार्यालय | पालुङटार गाउँ पञ्चायत ठाटीपोखरी | |

प्रहरी

गण्डकी अञ्चल एस.पी. कार्यालय अन्तर्गत गोरखा जिल्ला प्रहरीको संगठन भएको छ । पोखरीथोकमा अवस्थित प्रहरी निरीक्षक कार्यालयको मातहतमा यहाँ प्रहरी थाना, चौकी र चेकपोष्टहरू सञ्चालन भएका छन् ।

यी थाना, चौकी र चेकपोष्टको अतिरिक्त शान्ति सुरक्षाको दृष्टिले आवश्यक देखिएको सिर्दिबास, खैरेनी मुझुवा आदि स्थानमा अस्थायी चौकीको व्यवस्था गरिएको छ ।

कारागार

जिल्लाको सदरमुकाम पोखरीथोकमा एक कारागार छ । यो कारागार भवन ज्यादै पुरानो भइसकेको छ । कारागारभित्र कैदीहरूलाई कुटीर उद्योग व्यवसाय सम्बन्धी कुनै काम सिकाउने व्यवस्था छैन तापनि केही कैदीहरू आफ्नै निजी प्रयासबाट डोको, चित्रो, डालो आदि बुन्ने काम गर्दछन् ।

सरकारी वकील

सरकारी वकील सम्बन्धी नियम २०२८ को व्यवस्था अनुसार यहाँ राजपत्र अनंकित प्रथम श्रेणी तहको वकीलको दरबन्दी छ । जिल्लामा भइपरिआउने सरकारवादी मुद्दाहरू कानूनी कारवाहीको लागि अगाडि बढाउन र कानूनी सरसल्लाह दिन यो वकीलको मुख्य काम हो । २०२७।२८,२०२८।२९,२०२९।३०मा २३, २५ र १९ गरी जम्मा ६७ मुद्दाहरू सरकारी वकीलले हेर्नु परेको कुरा त्यस सन्बन्धी अभिलेखबाट देखिन्छ ।

जिल्ला अदालत

मुद्दा कारवाही र किनारा गर्न यहाँ एक जिल्ला अदालतको व्यवस्था छ । यो अदालतमा विभिन्न प्रकृतिका मुद्दाहरू पर्दछन् र कानून अनुसार किनारा गरिन्छ ।

आर्थिक वर्ष २०२७।२८ देखि २०२९।३० सम्ममा विभिन्न किसिमका जम्मा १,६०३ मुद्दाहरू परेको र जम्मा १,१९२ फछ्र्यौट भएको देखिन्छ । फछ्र्यौट भएका मुद्दाहरू ज्यादा त जाहेरी, तजवीज, मिलापत्र, डिसमिस, खारेजी, सरूवा, एक तर्फी र तामेली आदि शीर्षक अन्तर्गत गरिएको पाइन्छ ।

## पञ्चायत

गोरखा जिल्लाको जिल्ला पञ्चायत कार्यालय पोखरीथोकमा रहेकोछ । यो जिल्लामा जम्मा ६३ वटा गाउँ पञ्चायतहरू छन् । गोरखाबासीहरूको आर्थिक स्थिति त्यति राम्रो नभएकोले यहाँका पञ्चायतहरूको कोषमा पनि उल्लेखनीय आय नहुनु स्वाभाविकै हो । स्थानीय स्रोतबाट हुने पञ्चायतहरूको आय वार्षिक सालाखाला रू. ४५५। देखिन्छ । २०३० सालको अभिलेख हेर्दा सबैभन्दा बढी अर्थात् रू. १,३८१। आम्दानी गर्ने पञ्चायत पालुङटार हो र सबैभन्दा कम अर्थात् रू. १४६। आम्दानी गर्ने पञ्चायत पन्द्रुङ हो । यहाँको जिल्ला पञ्चायत कोषमा सालाखाला वार्षिक रू. ३३,०००। हुन्छ तर आर्थिक वर्ष २०२९।३० मा यहाँ जिल्ला सभा कोषमा रू. २९,१६७। मात्र जम्मा हुनसकेको थियो । जिल्ला पञ्चायतको आय स्रोत धुरीकर, घर कर, रेडियो

अनुमति पत्र, टिकट दस्तूर, टेण्डर फाराम बिक्री, घाट कर, माछा ठेक्का आदि हुन् । गाउँ पञ्चायतका आय-स्रोतहरूमा मुख्यतः टिकट दस्तूर, व्यवसाय कर, मिलापत्र दस्तूर, दाउरा कर, हाट बजार कर इत्यादि हुन् । जिल्ला पञ्चायत र गाउँ पञ्चायतहरूले भइपरिआउने स्थानीय कामहरूको साथसाथै स-साना विकास कार्यहरूमा समेत सहयोग गर्दै आएको पाइन्छ ।

यो जिल्लामा युवक संगठन, महिला संगठन, किसान संगठन र भूतपूर्व सैनिक संगठनहरू छन् । यी संगठनहरूको प्रारम्भिक समिति एवं सदस्य संख्या यसप्रकार छन्:–

| संगठन | प्रारम्भिक समिति | सदस्य संख्या |
|---|---|---|
| नेपाल युवक संगठन | १३ | १४३ |
| नेपाल महिला संगठन | १४ | १५४ |
| नेपाल किसान संगठन | १९ | २०९ |
| नेपाल भूतपूर्व सैनिक संगठन | ११ | १२९ |

# उपसंहार

गोरखा जिल्लामा हालसम्म भएका र हुनलागेका साना-ठूला विकास कार्यहरू माथि विभिन्न शीर्षक अन्तर्गत केही चर्चा गरिएको छ । यहाँ जिल्लाको भावी विकास कार्यक्रमको तर्जुमा गर्न सम्भाव्य देखिएका कुराहरू मात्र औंल्याउने प्रयास भएको छ । गोरखाको विकास सम्बन्धी कुरा हुँदा प्रथमतः यहाँको खाद्यान्न न्यूनता र फराकिला टारहरूको सम्झना हुन्छ । टारको आसपासमा सततः बगिरहेका खोलाहरू अर्थात् खोलाको वरपर वर्षौंदेखि बाँझो परेका टारहरूलाई हेर्दा यो जिल्लामा विद्यमान खाद्यान्नको न्यूनता अस्थायी प्रकृतिको हो भन्न करै लाग्छ । अतः चेपे, दरौंदी, खारखोला, चिलाउने खोला, ईस्तुल खोला, तालखोला र लुदी खोलाबाट नहर ल्याएर पालुङटार, छेपेटार, उल्टेटार, वथानुनटार, मजुवाटार आदि टारहरूमा करीब ५,००० हेक्टर (एक लाख रोपनी) जमीन सिचाइ हुनसक्ने देखिन्छ । यो जिल्लाको एक हेक्टर जमीनमा करीब दुई मेट्रिक टन खाद्यान्न उत्पादन हुन्छ । यस हिसाबबाट नयाँ सिचाइ हुने ५,००० हेक्टरमा १०,००० मेट्रिक टन उत्पादन भई गोरखाको वार्षिक सालाखाला ६,००० मेट्रिक टन खाद्यान्न न्यूनता पूरा हुन जानेछ ।

मनासुलु, हिमालचुली, बौद्ध हिमाल तथा श्रृङ्गी हिमालका मनमोहक हिमाली श्रृङ्खला र लेक एवं बूढीगण्डकी र मर्स्याङ्दीले परिवेष्टित यो गोरखा जिल्लाले सबैको दृष्टि छुन्छ। पुरातात्विक महत्वका पुराना दरबार, कोट र देवालयहरू बोकेर महाभारतको उत्तरी खोंचदेखि लार्के भोटसम्म फैलिएको विशाल नेपालको स्रष्टा यो गोरखा जिल्लालाई नजीकबाट हेर्ने सबैको रहर हुन्छ । अतः गोरखालाई पृथ्वी राजमार्गमा जोडेर यस भेकका नेपाली भट्टीहरूको केही आधुनिकीकरण गरेमा यो जिल्लामा पर्यटन उद्योगको विकास र विस्तार हुने सम्भावना छ ।

गोरखाको उत्तर भेकमा पर्ने खरीबोट, सिमजुङ, बारपाक, लाप्राक,गुम्दा तथा उहिया पञ्चायत क्षेत्रका बहुसंख्यक बासिन्दाहरूको मुख्य पेशा नै भेडापालन भएको छ तसर्थ यहाँका मानिसहरूलाई पशुपालन सम्बन्धी आधुनिक तरीका सिकाएर, आवश्यक ऋण उपलब्ध गराएर उन्नत जातका पशुहरू पालन गर्न लगाएर, पशु चिकित्सालय स्थापना गरी औषधोपचारको सुविधा दिएर यो जिल्लामा भेडा तथा अन्य पशु पालनको विकास गर्न सकिन्छ । यस किसिमको पशु-पालन कार्य साझा पद्धतिमा आधारित भएमा कम खर्चिलो र बढी लाभप्रद हुने देखिन्छ ।

जमीनको बनोट, यहाँको हावापानी, माटो तथा उचाइको विभिन्नतालाई हेर्दा गोरखा जिल्लामा ट्रपिकल, सब-ट्रपिकल र लेकाली फलफूल हुन सक्ने क्षेत्रहरू पाइन्छन् । आरूचनौटे, पालुङटार, छेपेटार, गाई-

खुर र क्यामुनाटारमा प्रशस्त आँप फलेको देखिन्छ । त्यस्तै कतिपय बेंसीहरूमा रूखकटहर तथा लुइँटेल क्षेत्रमा निकै भूइँकटहर, केरा र मेवा खेती हुन्छ । केही अग्लो भागमा सुन्तला, कागती, स्याउ तथा नासपाती हुनसक्छ । हाल यहाँको फलफूल खेती संगठित तरीकाबाट गरिएको छैन र विभिन्न प्रकारका रोग र कीटाणुबाट नोक्सान भएको पाइन्छ । अतः उन्नत जातका बोट बिरुवा रोपेर, कीटाणुनासक औषधि प्रयोग गरी संगठित रूपमा फलफूल खेती गर्ने प्रयास भएमा गोरखा जिल्लामा यसको विकास हुन सक्छ । यो जिल्लामा राडी, पाखी, गलैंचा, घरबुना बुन्ने जस्ता उनी सूती उद्योग, डोका, डाला, भकारी, स्याखु बुन्ने जस्ता वेत बाँस उद्योग र नेपाली कागज बनाउने, मौरी पाल्ने आदि स-साना घरेलु उद्योगहरू सञ्चालन गरी अत्यधिक कृषिमा निर्भर भएको जनतालाई उद्योग व्यवसाय तर्फ केही मात्रामा भएपनि पेशान्तरण गर्नसकिने सम्भावना छ । गोरखा जस्तो स्थानीय स्रोतहरू छरिएर रहेको पहाडी जिल्लामा स-साना उद्योग व्यवसाय, पशुपालन तथा फलफूल खेती विकासको लागि गरिने प्रयासहरू घरेलु विभाग, कृषि विकास बैंक तथा साझा संस्थाहरूको संयुक्त प्रयासबाट हुन युक्तिसंगत देखिन्छ ।